# गोरक्ष निखिल वाणी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक

माघ, २०६९

## तीर्थयात्रा विशेष

सिद्धाश्रम शक्ति केन्द्र

www.gnv.org.np

॥ ॐ नमो गुरु मछिन्द्र शब्द साँचा पिण्ड काचा मेरा भक्ति गुरुका शक्ति नवनाथै जगाऊँ चौरासीनाथै जगाऊँ फूरो मंत्र ईश्वरो गुरु गोरख वाचा ॥

# सिद्धाश्रम शक्ति केन्द्रले गत पौषमा आयोजना गरेको जोधपुर गुरुधामलगायत भारतका तीर्थस्थलहरुको भ्रमणका अविस्मरणीय क्षणहरु - १

गुरुधाम जोधपुर

पूजनीय गुरुमाता आशीर्वाद मुद्रामा

पूजनीय गुरुमातासँग प्रसन्न मुद्रामा साधकसाधिकाहरु

कुरुक्षेत्रमा अवस्थित गुरु गोरखनाथको मन्दिरभित्रको श्रीमूर्ति

पूजनीय गुरुमाताको ८४ व्यञ्जनबाट पादुका पूजन हुँदै

पूज्य अरविन्द गुरुदेवको चरणमा पुष्पमाला अर्पण गर्नुहुँदै सावरमातृका

शिविरमा नृत्यमा मस्त साधकसाधिकाहरु

तीर्थयात्राको दौरान भोजनका लागि रोकिएको ठाउँमा नृत्य हुँदै

● वर्ष १४ ● अङ्क ६ ○ माघ २०६९ ○ पूर्णाङ्क १६२

# जानकारी

*सिद्धाश्रम शक्ति केन्द्र नेपालको प्रचलित कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत् सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राणप्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैँमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ, जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिकनो सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुर्‍याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ ।*

*सिद्धाश्रम शक्ति केन्द्रबाट प्रकाशित 'गोरक्ष निखिल वाणी' नेपालकै पहिलो आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक पत्रिका हो । सद्‌गुरुदेवहरूको आशीर्वादस्वरूप यस पत्रिका २०५६ साल भाद्र महिनादेखि अनवरत रूपमा प्रकाशित भइरहेको छ । काठमाडौँ जिल्ला प्रशासन कार्यालयमा दर्ता भएको यस पत्रिकाको दर्ता नं. ७०/०५६ हो । यो पत्रिका धर्मको नाममा हुने गरेको शोषण, आडम्बर एवं पाखण्डविरुद्ध आवाज उठाउँदै वास्तविक तथ्यलाई जनसमक्ष उजागर गरी आध्यात्मिक जागरणको वातावरण बनाउने कार्यमा सरिक हुँदै आएको छ । प्रकाशनको शुभारम्भदेखि नै अलग्गै पहिचान एवं अस्तित्व बनाउन सफल यस पत्रिकाले मंत्र, तंत्र, योग, आयुर्वेद, सम्मोहन, ध्यान, वेद, पुराण, उपनिषद् आदिजस्ता ऋषिमुनिहरूद्वारा प्रतिपादित तथ्यहरूको व्यवहारिक एवं वैज्ञानिक पक्षहरूलाई प्रस्तुत गर्दै आइरहेको छ । पत्रिका स्वदेश एवं विदेशमा समेत आफ्ना लाखौँ पाठक एवं प्रशंसकहरूमाझ लोकप्रिय हुँदै गइरहेको छ । वेबसाइटमार्फत् पढ्न पाइने व्यवस्थाले विश्वभर छरिएका लाखौँ नेपालीहरूमाझ पनि प्रिय छ ।*

*पत्रिकामा प्रकाशित लेख, रचना, विज्ञापन, चित्रादिमा सम्पादक वा प्रकाशकको सहमति हुनु आवश्यक नरहेको पनि जानकारी गराइन्छ ।*

## यसभित्र

आफ्नै कुरा २
तीर्थयात्रा गुरुधामको ४
तीर्थदर्शनको पुण्यफल १६
तीर्थस्थान र आध्यात्मिक शक्तिको प्राप्ति २०
तीर्थ परम्परामा सन्निहित उद्देश्य र..... २४
श्रीपञ्चमी २७
एकादशी व्रत माहात्म्य ३२
राशिफल ३६
गोरखवाणी ३८
हातको चित्र लिने तरिका ४०
आयुर्वेद भनेको यति मात्रै हो त ? ४४
शुभकार्यको शुभारम्भ शुभमुहूर्तमा ४७
आश्रम गतिविधि ४८

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
**सिद्धाश्रम शक्ति केन्द्रद्वारा प्रकाशित**
मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-
पत्रिकाको कार्यालय
बसुन्धरा, काठमाडौं, पो.ब.नं. १०५११, २७६०
फोनः ०१-४३८९१५४,
URL: gnv.org.np, ´ail: info@gnv.org.np

पत्रिकासम्बन्धी कुनै पनि जानकारीका लागि पत्रिका व्यवस्थापक मधुबहादुर कार्की, मो. ९८४१३१५८६५ सित सम्पर्क राख्न सक्नुहुनेछ ।

प्रकाशकको ठेगाना
**सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं
पो.ब.नं.१०५११, २७६०,
फोनः ४३८९१५४, २१००१५३
ssk.org.np, info@ssk.org.np

मुद्रण
भेराइटी प्रिन्टर्स प्रा.लि.
कुलेश्वर, काठमाडौं ।

# आफ्नै कुरा

सिद्धाश्रम शक्ति केन्द्रले विभिन्न दिव्य कार्यक्रम सम्पन्न गर्ने क्रममा यसपालि विभिन्न तीर्थस्थलहरु एवं गुरुधामको यात्रा सफलतापूर्वक सम्पन्न गऱ्यो । मानवजीवनमा तीर्थको आफ्नै विशेष महत्त्व रहँदै आएको छ । भगवान् शिवले गंगालाई दिनु भएको आशीर्वादले नै होला, जसले गंगामा स्नान गर्दछ उसका सम्पूर्ण पाप नाश हुन्छ, जीवन धन्य हुन्छ भन्ने आशीर्वादले नै होला, सबैले गंगा स्नानलाई जोड दिनुभएको पाइन्छ । विशेष तिथि, मितिदेखि लिएर अनुकूल समयमा गंगाको रुपमा नदीहरुमा स्नान गर्ने परम्परा हिन्दु धर्म-संस्कृतिको परम्परा बन्दै आइरहेको छ । त्यस्तै विभिन्न दिव्य शक्तिपीठहरुको दर्शन-भ्रमण पनि हाम्रो धर्म-संस्कृतिको गर्व मानिन्छ । दिव्य शक्तिपीठहरुको दर्शन मात्रले पनि व्यक्तिलाई प्राप्त हुने आशीर्वादले जीवनलाई गति दिएको पाइन्छ, उत्साह, उमंग थपेको पाइन्छ, व्यवहारिक जीवनमा जिउने कला सिकाएको पाइन्छ । नयाँ-नयाँ दिव्य स्थलीहरुको भ्रमणले, साधकसाधिकाहरुलाई नयाँपनको अनुभव भयो । गुरु योजनामा खट्न अझै हौसला मिलोस् भन्नाका लागि विभिन्न तीर्थस्थलहरुको भ्रमणका साथमा गुरुधामको भ्रमण राखिएको थियो ।

शिष्यहरुका लागि गुरुधामले आफ्नै विशेष महत्त्व राख्दछ । आफ्ना परम आराध्यदेवको अवतरण स्थल, धर्मक्षेत्रको दर्शन, अवलोकनको परम ईच्छालाई यसपालि करिव डेढ सय जनाको टोलीले अनुभव गर्ने सौभाग्य प्राप्त गरेको थियो । सद्गुरुदेवको धामको दर्शन र शिविरमा भाग लिने सौभाग्य प्राप्त भयो, परम वन्दनीय गुरुमाताको श्री पादुका पूजन, दर्शनको सौभाग्य प्राप्त भयो, संस्थाको तर्फबाट सम्मान गर्ने सौभाग्य प्राप्त भयो, शिविरमा पनि नेपालीहरुको राम्रो सम्मान भयो, सिद्धाश्रम शक्ति केन्द्रलाई बधाइ दिइएको थियो, यस संस्थाले गरेका कार्यहरुको सराहना गरिएको थियो । कैलाश मानसरोवर शिविरको सर्वत्र चर्चा परिचर्चाले ठूलो ठाउँ लिएको अनुभव भयो । परम वन्दनीय गुरुमाता एवं पूज्य अरविन्द गुरुदेवले कैलाश मानसरोवरको डिभिडी विमोचन गर्नुभयो । माताले पनि दिल खोलेर कैलाश मानसरोवर शिविरको प्रशंसा गर्नुभयो र आशीर्वाद दिनुहुँदै प्रत्येक वर्ष यस्तो यात्रा हुनु पर्ने आशीर्वाद पनि दिनुभयो । यसरी सिद्धाश्रम शक्ति केन्द्रको गुरु योजनाको कटिवद्धतामा पूर्ण रुपले सम्मान भएको पाइयो । शिविरमा सहभागी विभिन्न प्रान्तका साधकसाधिकाहरुको प्रशंसा, धन्यवाद, गुरुकार्यको सराहनाले हामी सबै नेपालीहरुमा खुशी र गर्वको सीमा नै रहेन । यसरी गौरवमय तीर्थस्थलको भ्रमण र गुरुधामको दिव्यताले सबैमा नयाँ जोश, जाँगर छरेको पाइयो । सबैले जीवनकै अविस्मरणीय यात्राको रुपमा दिव्यस्थलको स्मरणलाई मन-मस्तिष्कमा सजाउँदै यात्रालाई सफलतापूर्वक सन्पन्न गरे । यस्तो दिव्य तीर्थस्थली एवं गुरुधामको यात्रा गर्ने सम्पूर्ण भाग्यमानी तीर्थयात्रीहरुलाई हाम्रो पनि बधाइ ! साथै सबैका लागि यस्तो अवसर बारम्बार आइरहोस् भन्ने प्रार्थना सद्गुरुदेवहरुसमक्ष राख्न चाहन्छौँ ।

यसपालिको अंकलाई 'तीर्थयात्रा विशेष'को रुपमा निकाल्ने कोशिस गरेका छौँ । तीर्थस्थल अनन्त छन्, महिमा र गरिमा पनि अनन्त छन् । तैपनि केही क्षेत्रको भए पनि जानकारी र तीर्थयात्राको रिपोर्ट प्रस्तुत गर्ने प्रयास गरेका छौँ । यस क्रममा भए गरेका समस्त गल्ती, कमी-कमजोरीका लागि परमपूज्य सद्गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष क्षमायाचना गर्दै आवश्यक सल्लाह, सुझाव र प्रतिक्रियाको आशा राख्दछौँ । अस्तु ।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ

मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ । गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ । सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ । यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ । गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं ।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानवजीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ । आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३५ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो । वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो । आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यासजीवन बिताउनुभयो । त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो । संन्यासजीवनपश्चात् पुन: गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो । यसको लागि सयौँ पुस्तकहरूको रचना गर्दै असङ्ख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो । यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ डा. नारायणदत्त श्रीमालीको नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो । आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो । हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ ।

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम् ।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ । महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ । योगमार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो । यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ । गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ । श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ । विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौँ हजारौँ वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ । यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन् । आमाको कोखबाट नभई आवश्यकताअनुसार आफै प्रकट हुनुहुने महायोगी अजर-अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ । उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नै पर्दछ । नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ । नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो । नेपालमा मात्र नभएर विश्वभर उहाँका सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन् । आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ ।

सिद्धाश्रम शक्ति केन्द्रले कैलाश मानसरोवरको तीर्थयात्रा कार्यक्रम सम्पन्न गरेको केही महिना बित्न नपाउँदै गत पौष महिनामा जोधपुर गुरुधामलगायत भारतका विभिन्न तीर्थस्थलहरूको यात्रा सम्पन्न गरेको छ । पौष महिनाको १० गतेदेखि १७ गतेसम्म भनिए पनि तीर्थयात्रा ८ दिन लम्बिएर १२ दिन पुगेको थियो । तीर्थयात्राको आनन्दलाई अनुभव गर्दै घरमा फर्किदा १३ औं दिनको बिहानी भइसकेको थियो । यस तीर्थयात्रालाई ऐतिहासिक रूपमा सफल भएको मानिएको छ ।

तीर्थयात्रा आध्यात्मिक मात्र नभएर एउटा साहसिक यात्रा पनि हो । यस यात्रामा कुनै अप्ठ्याराहरू नआएको यथार्थता यहाँ उल्लेख गर्न पाउँदा अति नै हर्षित र गर्वित हुँदै परमपूज्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज, पूजनीय गुरुमाता र पूज्य अरविन्द गुरुदेवको कृपा, अनुकम्पाप्रति नतमस्तक हुँदै उहाँहरूको चरणकमलमा कोटिकोटि साष्टाङ्ग दण्डवत् प्रणाम अर्पण गर्दछौं ।

सिद्धाश्रम शक्ति केन्द्रको केन्द्रीय कार्यालय रहेको ठाउँ बसुन्धराबाट बिहान ९ बजे ८५ जनाको यात्रुहरू बोकेर दुईवटा बस सुनौली नाकाका लागि हुँइकिएको थियो । सुनौली सिमानामा पुग्दा राति ९ बजिसकेको थियो । सुनौलीबाट परमपूज्य सद्गुरुदेव

# तीर्थयात्रा गु

श्री श्री महायोगी गुरु गोरखनाथको भव्य एवं दिव्य मन्दिर रहेको गोरखपुर पुग्न करिव २ घण्टा लाग्यो । राति ११ बजेतिर त्यहाँको धर्मशालामा बासको व्यवस्था गरिएपछि केही समयमा नै भोजन तयार भयो । भोजनमा अति नै स्वादिष्ट खिचडी (जाउलो) खाँदै र चियाको चुस्की लगाउँदै तीर्थयात्रुहरू आनन्दित हुनुभएको थियो । गोरखाको गोरख गुफालगायतका गोरख मठहरूमा जसरी रोट चढाउने गरिए जस्तै गोरखपुरको गोरख मन्दिरमा गुरु गोरखनाथलाई खिचडीको भोग लगाउने चलन निकै पुरानो हो । भीक्षा माग्ने क्रममा प्राप्त भीक्षाहरू एउटै झोलामा मिसिएका हुन्छन्, यी भीक्षामा प्राप्त गेडागुडी र अन्नहरूलाई मिसाएर पकाएर तयार भएको परिकार नै गुरु गोरखनाथलाई चढाउने परम्परा बसेको हो भन्ने अनुमान गर्न सकिन्छ ।

यहाँको गुरु गोरखनाथको मन्दिर अति नै कलात्मक र भव्य छ । मन्दिरभित्र गुरु गोरखनाथको अति नै भव्य र दर्शनीय श्रीमूर्ति रहेको छ । यस श्रीमूर्तिको दर्शनमा चित्तको आकर्षणले विश्राम नै नपाउने रहेछ । जति हेरे पनि नअघाउने गुरु गोरखनाथको श्रीमूर्ति रहेको यस ठाउँमा

# गुरुधामको

**गोरखपुरस्थित गुरु गोरखनाथ मन्दिर र भित्रको श्रीमूर्ति**

गरिएको थियो । सुनौली नाकाबाट केही किमिको दूरीमा रहेको यस क्षेत्रभित्र नवनाथ चौरासी सिद्धहरू, विभिन्न ऋषिमुनिहरू, देवीदेवताहरू र राजा-रजौटाहरूका मूर्तिहरू भव्य रूपमा शोभायमान छन् । यहाँ महन्त दिग्विजयनाथ स्मृति भवन रहेको छ, यहाँ पनि विभिन्न

**पूजनीय गुरुमाता तथा पूज्य अरविन्द गुरुदेव कैलाश मानसरोवरको डिभिडी विमोचन गर्नुहुँदै**

संस्थाबाट बिहान आरतीको कार्यक्रम सम्पन्न भएको थियो । यस क्रममा तीर्थयात्रुहरूलगायत त्यहाँ उपस्थित अन्य भक्तजनहरूले भावविभोर भएर आरती गाउँदा वातावरण अति नै आनन्दित र दिव्य बनेको थियो । उक्त दिन संस्थाको तर्फबाट गुरु गोरखनाथको पूजन

**पूजनीय गुरुमाता कैलाश मानसरोवरको प्रसंगमा**

**गुरुधाम जोधपुर शिविरमा नृत्यरत सहभागी तीर्थयात्रुहरु**

**भागीरथी गंगामा रहेको सिन्डिया घाट**

**भागीरथी गंगामा डुंगाबाट यात्रा गर्ने क्रममा**

**गोरखपुरको दिग्विजयनाथ स्मृति भवनमा रहेका श्रीमूर्तिहरु**

देवीदेवताहरूलगायतका श्रीमूर्तिहरू विराजमान छन् । यहाँ रहेको पुस्तक बिक्री कक्षमा संस्थाले गोरक्ष निखिल वाणीका केही प्रतिहरू हस्तान्तरण गरेको थियो ।

गोरखपुरमा एक रात बसेपछि यात्रा बनारसका लागि हुँइकियो। गोरखपुरबाट २२० किमि टाढा रहेको बनारस आउने क्रममा बीच बाटोतिर चिया पियौँ। चौधरी यात्रा कं. ट्राभल एजेन्सीले बसलगायत चिया, खाना, नास्ताको व्यवस्था गरेअनुसार नै तीर्थयात्रुहरूले बेला-बेला चिया, नास्ता र भोजन ग्रहण गर्न पाइरहनुभएको थियो। बनारसमा पुगेर त्यहाँको धर्मशालामा बासको व्यवस्था गरिएपछि खाना खाँदा रातको सवा दस भइसकेको थियो। पङ्क्तिबद्ध हुँदै भोजन

**पुष्करधाम आइपुग्दाको क्षण**

प्रसादका लागि उभिनुभएका यात्रुहरू अविचलित रूपमा आनन्दित हुँदै प्रसन्न मुद्रामा देखिनुहुन्थ्यो। भारतको पुराना सहरहरूमध्ये एक मानिएको नौलो ठाउँमा पुग्दाखेरिको आनन्द बिर्सी नसक्नु थियो । हामी सबै धर्मशालामा रहेको ठूलो कक्षमा बस्यौँ ।

१२ गतेको यात्रा अति नै आनन्दप्रद र उत्साहजनक थियो । बिहानै वाराणसी काशी (भागीरथी काशी) मा स्नान गर्नेहरू आनन्दमा मग्न हुनुहुन्थ्यो । डुंगामा बसेर गंगाको यात्रा गर्दाखेरिको आनन्द

**भागीरथी गंगामा डुंगाबाट गन्तव्यतर्फ**

बयान गरी साध्य थिएन। चराहरू चारो खान डुंगामाथि हुँदै बथानका बथान उडिरहेको दृश्य अति नै रमाइलो र आनन्दप्रद थियो। यात्रुहरू डुंगामा नै बिक्रीका लागि राखिएका दानाहरू किन्दै 'वाऽ वाऽऽ' गर्दै

## काशी

सप्तपुरीहरुमा एक काशी (वाराणसी) पनि एक हो । एकताका यहाँ मृत्यु हुँदा स्वर्ग प्राप्त हुने किंवदन्तीले ठूलो प्रभाव पारेको थियो । यसैले मरणासन्न मानिस काशीमा आइपुग्थे । कैयौँ समय पहिलेदेखि यहाँ बस्दथे । प्राचीनकालमा यो विद्याको राम्रो केन्द्र रहेको थियो । द्वादश ज्योतिर्लिंगमा यहाँको विश्वनाथ मन्दिरलाई लिइन्छ र शक्तिपीठहरुमा मणिकर्णिका घाटको विशाल क्षेत्रलाई गनिन्छ । वृन्दावनमा जस्तै यहाँ पनि गल्ली गल्लीमा बग्रेल्ती मन्दिरहरु छन् । यहाँ मुख्य पाँच घाट छन्– वरुणा संगम घाट, पंच गंगा घाट, मणिकर्णिका घाट, दशाश्वमेध घाट, असी संगम घाट । मणिकर्णिका मसान हो । भनिन्छ कि राजा हरिश्चन्द्र यहीँ बसेका थिए । दशाश्वमेध घाट नजिक भगवान् श्रीरामले दश अश्वमेध यज्ञ गराउनुभएको थियो ।

वरुणा र असी नदीहरु गंगामा मिल्दछन् । यसैले ती दुई नदीहरुको स्मृति दिलाउने संयुक्त क्षेत्र वाराणसी नामले प्रख्यात भयो । पहिले यसको नाम काशी थियो । यहाँ थुप्रै घाटहरु छन् । प्रायः ५० वटा घाट अहिले पनि सही अवस्थामा र टुटे फुटेको स्थितिमा छन् । काशी क्षेत्रको पंचकोसी परिक्रमा ६० किमि छ । यो पाँच दिनमा पूरा हुन्छ । यस मार्गमा प्रायः सबै देवालय छन् । एकताका यहाँ ५९ शिवलिंग, १२ आदित्य, ५६ विनायक, ८ भैरव, ९ दुर्गा, १३ नृसिंह, १६ केशव देवालय क्षेत्र प्रमुख थिए । आजभोलिको अश्रद्धा, उपेक्षाको कारण तिनमा कति त लुप्त पनि भइसकेका छन् । यहाँ कैयौँ तपस्वीहरुको निवास, आश्रमहरुको स्मृतिचिन्ह अहिले पनि छन् । काशीमा गंगा ६ मिल पश्चिम बाहिनी बही हो । काशीमै जैन सम्प्रदायको अतिशय तीर्थ छ । यहाँ सातौँ तीर्थकर सुपार्श्वनाथको मन्दिर छ ।

चर्को शीतलहरको दृश्य

चराहरूका लागि पवित्र गंगामा दानाहरू हुऱ्याइरहनु भएको थियो। यसपछि कतिपय यात्रुहरू काशीमा श्राद्ध गर्न बस्नुभयो। काशीमा श्राद्ध गर्न पाउँदा तीर्थयात्रुहरू अति नै हर्षित हुनुहुन्थ्यो। स्नान, तर्पण, श्राद्धको क्रममा त्यहाँ रहेका विभिन्न घाटहरूको पनि अवलोकन गरियो। यसपछि डुंगामा बसेरै द्वादश ज्योतिर्लिङ्गमध्येको एक विश्वनाथ भगवान्को दर्शनका लागि प्रस्थान गरिएको थियो। भव्य एवं दिव्य

काशी विश्वनाथ ज्योतिर्लिङ्ग

यस क्षेत्रमा पुग्दा मन हर्षित थियो भने नयाँ जोश, उमंग सबैमा तरङ्गित थियो। संस्थाको तर्फबाट ११ जना ब्राह्मणहरूबाट रुद्री गराइयो। हामी सबै विश्वनाथ भगवान्को दर्शन गरेपछि धर्मशालामा फर्कियौं। भोजनपछि दिउँसोतिर गाडी इलाहावाद हुँदै यात्रा अगाडि बढिरहेको थियो। राति करिव ९:३० बजेको हुँदो हो, उत्तर प्रदेशको

## विश्वेश्वर

श्री विश्वेश्वर ज्योतिर्लिंग वाराणसी (बनारस) वा काशीमा विराजमान रहेको छ । एकपटक पार्वतीले काशी र त्यहाँको विश्वेश्वरका बारेमा भगवान् शकरसित प्रश्न गर्नुभयो– 'प्रभु ! हजुरले ममाथि कृपा गरेर काशी एवं विश्वेश्वरको महात्म्यको वर्णन गर्नुहोस् । परमेश्वरले भ्न्नुभयो– 'भद्रे ! तिम्रो यो प्रश्न अति नै कल्याणकारी छ । यो अविमुक्त क्षेत्र काशी मेरो गुप्त क्षेत्र हो । यो सबै प्राणीहरुको मुक्तिको कारण हो । मेरा भक्तहरु यहाँ रहेर पाशुपत योगको अनुष्ठान गर्दछन् । यहाँ जोसुकै मरे पनि अवश्यै ऊ मुक्त हुन्छ । यहाँ कुनै पनि साधनको आवश्यकता पर्दैन । पवित्र होस् वा अपवित्र, पापी होस् वा धर्मात्मा, स्वेदज, अण्डज, उद्भिज एवं जरायुज सबैलाई यहाँ मरणोपरान्त मुक्ति प्राप्त हुन्छ । यस अवियुक्त क्षेत्र काशीको विस्तार चारै दिशामा पाँच कोससम्म छ । यदि निष्पाप पुरुषले काशीमा शरीर छोड्दछ भने उसले शीघ्र नै मोक्ष पाउँदछ । उसको पुनर्जन्म हुँदैन । जो व्यक्ति काशीमा आएर गंगामा स्नान गर्दछ, उसको क्रियमाण र संचित सबै कर्मको क्षय हुन्छ । देवर्षिसहित सबै देवगण यहाँ आएर मेरो आराधना गर्दछन् । काशीमा भगवान् शंकर विश्वेश्वर वा विश्वनाथको रुपमा अधिष्ठित भएर प्राणीहरुलाई भोग एवं मोक्ष प्रदान गर्नुहुन्छ । विश्वेश्वर ज्योतिर्लिंगको पूजा अर्चनाबाट सबै कामनाहरुको सिद्धि हुन्छ र अन्तमा परमपुरुषार्थ मोक्षको पनि प्राप्ति हुन्छ ।

पूज्य अरविन्द गुरुदेव आशीर्वचनको क्रममा

श्री मणिकर्णिका तीर्थ (घाट) काशीमा श्राद्ध हुँदै गर्दाको क्षण

## बसभित्रै गोरक्ष प्रकट तिथि

परमपूज्य सद्‌गुरुदेवहरुको कृपा, अनुकम्पास्वरुप सिद्धाश्रम शक्ति केन्द्र नेपालले गोरक्ष प्रकट दिवसलाई विशेष रुपमा मनाउँदै आइरहेको छ । श्री श्री महायोगी गुरु गोरक्षनाथको प्रकट तिथिले आफैमा ठूलो महत्व बोकेको छ । गोरक्ष प्रकट तिथिमा सम्पन्न हुने कार्यक्रमले माहायोगीप्रतिको भक्ति, आस्था, निष्ठालाई नै उजागर गरेको हुन्छ । यही क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत पौष १३ गते गोरक्ष पूर्णिमा अर्थात् गोरक्ष प्रकट तिथिलाई भिन्नै किसिमले पनि मनाएको थियो । भारतका विभिन्न तीर्थस्थलहरुको यात्रा क्रममा बसभित्रै निखिल स्तवन, गोरक्ष स्तवन, नामसङ्कीर्तन, गुरु पादुका पूजन, मन्त्रजप गरेर गोरक्ष प्रकट तिथिलाई सम्पन्न गरेको थियो । यसरी गोरक्ष प्रकट तिथिलाई गुडिरहेको बसभित्र बसेर सम्पन्न गरेको इतिहास रचिएको छ ।

आमापुरमा बस रोकियो । यो ठाउँ कानपुरबाट करिव २ घण्टा वर थियो । शीतलहर चलेको हुनाले अति नै जाडो थियो यहाँ । झपक्कै कुइरो लागेको हुनाले बसभित्रबाट बाहिरको दृश्य नदेखिने थियो । बसको गति अति नै सीमित थियो । कुहिरोले गर्दा सडकमा धेरै नजिकका दृश्यहरू पनि स्पष्ट रूपमा देख्न मुश्किल थियो । बत्ती बालेर सडकमा गाडीहरू गुडिरहेका थिए ।

१३ गते रातभरिको यात्रापछि आगराबाट ११५ किमि वर रहेको उत्तर प्रदेशको इट्टावा आइपुगेका थियौं । यहाँ शौच, स्नान भयो । यसपछि उत्तर प्रदेशकै फिरोजावाद आइपुगियो । झण्डै आमापुरमा देखिएको शीतलहर इट्टाना हुँदै अगाडि बढ्दासम्म पनि समाप्त भएको थिएन । बसको गति मन्दप्राय: नै थियो । यसबाट यात्रा ढिलो गतिमा

सावरपन्थी सदस्य रामजी अर्याल संस्थाको तर्फबाट शिविरमा बोल्नुहुँदै

अगाडि बढिरहेको थियो । बिहान साढे नौ, दस बज्दा पनि गाडीमा बत्ती बाल्नु पर्ने स्थिति देख्दा हामीलाई अनौठो लागेको थियो ।

**'कहाँ छौ गोरख, कहाँ छौ निखिल,**
**तिम्रै छ भरोसा, नपार निराश,**
**देऊ न दर्शन मलाई, हे मेरा गुरुदेव ।'**

मन्द गतिमा हुइँकिरहेको गाडीभित्र भजनले गुरुदेवहरूलाई खोजिरहेको थियो । दर्शनका लागि अति नै व्याकुल हुँदै आर्तनाद गरिरहेको थियो । यस्तो भजनले कतिलाई दियो आशा, कतिले पाए भरोसा, यसलाई त बसभित्र कसैले पनि उजागर गर्नुभएन । तर भजनको तारले भने गुरुदेवहरूलाई तान्न सफल भएको थियो ।

रातिको करिव साढे एघार बजेतिर पुन: जोधपुरका लागि प्रस्थान गरियो । बसहरूको गतिले तीव्र गति लिन भने पाइरहेको थिएन । बिहानको साढे दस बज्दा पनि घामको झुल्को देख्न पाइएन । आगराको फरिदावाद पुग्दा नपुग्दै भने मन्द चालमा बल्ल घाम झुल्केको देखियो । दिउँसो करिव १२:३० मा हामी उत्तर प्रदेशलाई राजस्थानबाट छुट्याउने प्रवेशद्वारमा आइपुग्यौं । यहाँबाट गोरक्ष प्रकट तिथिको पावन अवसरमा पूजन, भजन, आरती गर्दै जयपुर पुग्दा रातिको सवा छ भइसकेको थियो । पुष्कर नगरपालिका आगमन गर्दा रातको झण्डै बाह्र बज्न लागेको थियो । राति यहीँकै अखिल भारतीय श्री जाट विश्रामस्थली धर्मशालामा बास बसियो । बिहान

पुष्कर सरोवरको दर्शनार्थ एवं स्नानका लागि प्रस्थान गरियो । स्थिर रूपमा रहेको यस पुष्कर सरोवर क्षेत्रमा त्रेता युगमा भगवान् राम आउनुभएको थियो भन्ने भनाइ छ । एक हजार मन्दिर यही क्षेत्रमा रहेको कुरा हामीले सुन्यौं । संस्थाको तर्फबाट यहाँ पूजन गरिएको थियो । यसअघि यहाँ शुल्क तिरेर प्राय: हामी सबै तीर्थयात्रुहरूले सामुहिक पूजन गरेका थियौं । ब्रह्माको एक मात्र पूजन हुने क्षेत्र भनेको यही पुष्कर सरोवर हो । स्नान, तर्पणपछि यहाँस्थित विभिन्न मन्दिरहरूको दर्शन गरेका थियौं । गुरु गोरखनाथको मन्दिर पनि यहाँ रहेको छ । यहाँबाट जोधपुर (गुरुधाम) प्रस्थान गर्दा दिउँसोको साढे बाह्र बजिसकेको थियो ।

आफ्ना परम वन्दनीय गुरुमाताको दर्शन, कृपा, आशीर्वाद को याचना, कामनाका साथ तीर्थयात्राको टोली जोधपुरको प्रांगनमा प्रवेश गरेर झोलाहरू राख्न मात्र के भ्याउनु भएको थियो, करुणामयी माताको कृपा तत्क्षण नै वर्षेको अनुभव भयो र हामी सबै परम

**पूजनीय गुरुमाताको पूजन हुँदै**

वन्दनीय माताजीको पादुका दर्शन एवं आशीर्वाद पङ्क्तिबद्ध भई लिन थाल्यौं । यसरी गुरुधाम प्रवेशसँगै सद्‌गुरुदेवकै निवासमा पूजनीय गुरुमाताको दर्शनले हाम्रो भक्तिभाव सद्‌गुरुदेव कहाँ पुगिरहेको महसुस भएको थियो । यात्राका विभिन्न कठिनाईहरू, सुख, दुःखहरूलाई बुझ्नु भएर होला, माताजीले पुग्ने बित्तिकै हामीलाई यस्तो दिव्य अवसर प्रदान गर्नुभयो । जोधपुरको शिविर कार्यक्रम, गुरुधाम आदिको अवलोकन इत्यादि जिज्ञासासहित हाम्रो टोली शिविर स्थलमा प्रवेश गरेको थियो ।

जोधपुरको पहिलो दिनको शिविरमा पुग्दा साँझ भइसकेको थियो । पूजनीय गुरुमाताको दर्शनपछि पूज्य अरविन्द गुरुदेवको चरणकमलमा संस्थाको तर्फबाट सावरपन्थी सदस्य, सावरमातृका, काठमाडौं, पोखरा, गोरखा, तनहुँ, ललितपुर, भक्तपुर आदिबाट प्रतिनिधित्व गर्दै साधकसाधिका कार्यकर्ताहरूले शिविरमा माल्यार्पण गर्नुभएको थियो ।

नेपालको प्रसंगमा उद्‌घोषकले नृत्यको सन्दर्भ उठाउँदै 'नेपालका साधकसाधिकाहरू अति राम्रो नृत्य गर्नुहुन्छ, त्यसैले अगाडि आएर नृत्य गर्नुहोस्' भनेर आग्रह गर्नुभएको बेला वातावरण अति नै गौरवान्वित भएको थियो । यसको श्रेय कसैलाई जाँदैन परमपूज्य सद्‌गुरुदेवहरूलाई नै जान्छ, उहाँहरूको छत्रछायामा सिद्धाश्रम शक्ति केन्द्रका साधकसाधिकाहरू नृत्यमा पोख्त छन्, यही नै यथार्थ हो । यस कुराले आश्रमको छवि त चुलियो नै यसबाट नेपाललाई अन्तर्राष्ट्रिय रूपमा अझ बढी चिनाउन सहयोग पुगेको छ ।

प्रथम दिनको उक्त शिविरमा पूज्य अरविन्द गुरुदेवले 'मनुष्यमा विद्यमान ज्ञानेन्द्रिय र कर्मेन्द्रियहरूलाई कसरी जागृत र ऊर्जा दिने' सम्बन्धमा सारगर्वित आशीर्वचन दिनुभएको थियो । पूज्यवरले ज्ञानेन्द्रियहरूको जागरण र ऊर्जाबाट यसको पोषण हुन्छ,

**श्री गंगापुत्र भीष्मपितामह वाणशय्या पाण्डव मन्दिर, कुरुक्षेत्र**

### बसभित्रको आरती

सिद्धाश्रम शक्ति केन्द्रबाट आयोजित कुनै पनि कार्यक्रममा बसबाट यात्रा भइरहेको अवस्थामा पनि नित्य गुरु आरती सम्पन्न हुने गर्दछ । तीर्थयात्राको क्रममा पनि समय मिलेसम्म प्रत्येक दिन गुरु आरती भएको थियो । बसभित्र गोरक्ष निखिल वाणीको बाहिरी पृष्ठमा भएको गुरुद्वयको तस्विरयुक्त कभरलाई बसको भित्तामा टाँसेरै पनि गुरु आरती सम्पन्न भएको थियो । बसभित्र भौतिक वस्तु र अन्य आवश्यक सामग्रीको अभावमा पनि आफ्ना आराध्य सद्‌गुरुदेवहरुको आरती तीर्थयात्रुहरुका लागि भक्ति र शक्ति आर्जनको ठूलो माध्यम भएर रहेको थियो ।

**कुरुक्षेत्रमा रहेको श्री हनुमानजीको विशाल मूर्ति**

### पुष्कर

यहाँ नारद तथा सनकादि ऋषिहरुले तपस्या गरेका थिए । यो पाँच पवित्र प्रमुख सरोवरहरुमा एक मानिन्छ । पर्वत शिखरमा ब्रह्माजीको मन्दिर छ । यसको दायाँ-बायाँ गायत्री-सावित्रीको पनि प्रतिमा छ । यज्ञ पर्वतमा अगत्स्य आश्रम छ । यहाँ सरस्वती नदी प्रवाहित भएको छ । नाग पर्वतमा धेरै गुफाहरु छन् जसमा भर्तुहरि शिला तथा भर्तुहरि गुफा विशेष रुपमा दर्शनीय रहेका छन् । पुष्करको साना र ठूला गरी चार परिक्रमाहरु हुन्छन् । अन्तर्वेदी ६ मिल, मध्यवेदी १० मिल, प्रधानवेदी २४ मिल र बहिर्वेदी ४८ मिलको छ । यी परिक्रमाहरुमा अनेकौं ऋषिहरुको निवास, आश्रमहरुको स्मृति चिन्ह छन् ।

## कुरुक्षेत्र

कुरुक्षेत्र एउटा नगर पनि हो र सूर्यग्रहणको अवसरमा यहाँ ठूलो मेला पनि लाग्दछ । प्राचीनकालमा यो एउटा सुविस्तृत भूखण्ड थियो, ब्रजभूमिजस्तै यसको परिधि ५० मिल लामो तथा यति नै चौडा मानिन्छ । वामनपुराणको ३३ औं अध्यायमा यसलाई उत्तर भारतको विशालकाय शिक्षा क्षेत्र बनाएको थियो । राजा कुरुले यसलाई एक आदर्श कृषिक्षेत्र बनाएका थिए । उनैको नामले यो कुरुक्षेत्र कहलियो । महाभारतमा वर्णन गरिएको छ कि पावन सरस्वतीको तटमा यहाँ अनेकौं ऋषि आश्रम र गुरुकुल थिए । सहस्र छात्रहरुले यहाँ शिक्षा पाउँदथे । प्रसिद्ध कौरव-पाण्डव युद्ध यहाँ भएको थियो जुन १८ दिनमा नै समाप्त भएको थियो । वामनपुराणका अनुसार यो विशाल क्षत्रे स-साना उपक्षेत्रहरुमा बाँडिएको थियो जुन यसप्रकार छन्– काम्य वन, अदिति वन, फलकी वन, व्यास वन, सूर्य वन, मधु वन, शीत वन । यस प्रदेशमा नदीहरु पनि सातवटै बग्दछिन्– सरस्वती, वैतरणी, आपस्रवा, मधुस्रवा, कौशिकी, दृषद्वती, हिरण्यवती । महाभारतका कालका कैयौं स्मृतिचिन्ह यहाँ पाइन्छन् । यो समस्त क्षेत्र अनेकौं देवालय, पवित्र तलाउ, ऋषि परम्पराका अवशेषहरुले भरिएका छन् ।

**कुरुक्षेत्रको ब्रह्मा मन्दिर**

जसबाट अद्भुत शक्ति उत्पन्न हुन जान्छ, यस शक्तिबाट मानिस सर्वसत्तामा पुग्न सक्छ भन्नुहुँदै मानिस यस शक्तिलाई देख्न र जाग्रत गर्न असमर्थ छन् र धारणा, ध्यान र समाधि नै यसलाई जागृत गर्ने माध्यम हो, पूज्यवरले भन्नुभयो ।

पूज्यवरले पुनः भन्नुभयो– 'गुरुलाई धारण गर्नुको अर्थ हो कि त्यस ज्ञानलाई आफूमा ल्याउन सकियोस् । सूर्यले प्रकाश फैलाए जस्तै गुरुकृपा फैलिइरहेको हुन्छ, यसका लागि धारणा आवश्यक हुन्छ ।' पूज्यवरले अगाडि बताउनुभयो– 'मनुष्यजीवन अगाडि बढाउन गुरु धारण गर्नुपर्छ, राग, द्वेष, घृणा आदि हटाउन गुरु धारण गर्नुपर्दछ ।' उहाँले भन्नुभएको थियो– 'मनको ऐनालाई सफा गर्नु गुरुको कार्य हो र भय, चिन्ता, बाधा हटाउनु ऐना सफा गर्नु हो ।'

### हाँसो र ठट्टा

१२ दिवसीय तीर्थयात्राको क्रममा प्रायःजसो रमाइला क्षणहरु भए । यात्रालाई रुचिकर र थकानबाट मुक्त राख्न यी क्षणहरुले औषधीको काम पनि गरेको थियो । विशुद्ध किसिमका रमाइला क्षणहरुबाट निस्केका हाँसोका फोहराबाट वातावरणमा ऊर्जा थप्ने काम भएको थियो भने यसले बसभित्र निद्रा लाग्नबाट पनि यात्रुहरुलाई जोगाएको थियो । हाँसो मानवका लागि ईश्वरप्रदत्त प्रसाद हो । स्मरणीय छ, संसारमा मानवले मात्र हाँस्न जानेको हुन्छ । अरु प्राणी यस प्रकृतिप्रदत्त प्रसादबाट वञ्चित छन् ।

उहाँले चित्तको प्रसन्नता बिना अघि बढ्न सकिन्न भन्ने कुरा अघि सार्नुहुँदै हामीभित्रको शक्ति जाग्रत नगरेसम्म विशिष्ट हुन नसकिने बताउनुभयो । विशिष्टताको अर्थलाई परिभाषित गर्नुहुँदै पूज्यवरले बताउनुभयो– 'बाधा, दुःख आउँदा पनि त्यसमा लिप्त नहुनु ।'

परमपूज्य सद्गुरुदेवले हजारौंपटक भन्नुभएको प्रसंगलाई कोट्याउनु हुँदै पूज्य अरविन्द गुरुदेवले भन्नुभयो– 'तिमी ब्रह्म हौ, ईश्वर हौ । तर यसलाई चिन्ने क्षमता हामीले गुमाइसकेका छौं ।' 'नववर्षभित्र समाधिको अवस्थामा आउन सक्नुहोस् ।'– नववर्षको पावन अवसरमा पूज्यवरले आशीर्वाद दिनु भएको थियो ।

शिविरको दोस्रो दिन संस्थाको तर्फबाट बोल्नु हुँदै सावरपन्थी सदस्य एवं संयोजक श्री रामजी अर्यालले कैलाश मानसरोवरको प्रसंगलाई फेरि एकपटक स्मरण गराउनुभयो । उहाँले सिद्धाश्रम शक्ति केन्द्रको आयोजनामा सम्पन्न कैलाश मानसरोवर यात्रासम्बन्धी विवरण सुनाउनु हुँदा ताली र हाँसो सँगै मिसिएर वातावरणलाई नै

**पूजनीय गुरुमाता शिविरमा सवारी हुने क्रममा**

## ब्रजभूमि-मथुरा

भगवान् श्रीकृष्णको लीलाभूमिलाई ब्रजभूमि भनिन्छ । यसमा कैयौँ स्थान प्रख्यात र कैयौँ त सर्वसाधारणको जानकारीभन्दा पर छ । भगवान् मथुरामा जन्मनुभयो, गोकुलमा पालिनुभयो, वृन्दावनमा खेल्नुभयो, गोवर्धनमा गाई चराउनुभयो, राधाकुण्ड नन्दगाउँ बरसानेमा राधासित सम्पर्क भयो । यसरी नै अरु पनि साना-ठूला यस सहरमा अनेकौँ स्मृति चिन्ह छन् जसबाट भगवान्का बाल लीलाहरुको परिचय प्राप्त हुन्छ ।

ब्रज चौरासी कोसमा फैलिएको छ । यसमा उत्तर प्रदेश मात्र नभई राजस्थान प्रान्त पनि सम्मिलित छ । भरतपुर, डीग, कामा आदि ठूला न्गर पनि यस परिधिमा आउँछन् । हरेक वर्ष यस परिधिका भक्तजनहरु परिक्रमा गर्दछन् । गोसाईंजीको यात्रा अति नै भव्यताका साथ निस्कन्छ र प्रायः दुई महिना चल्दछ । बंगाली भक्तजन यसलाई पन्द्र दिनमा नै पूरा गर्दछन् । उनीहरु कैयौँ कैयौँ दिन रोकिन्नन् र साथै गति पनि तीव्र राख्दछन् ।

दुर्वासा, अक्रूर, ध्रुव, बलि, विरजानन्द आदि महामनस्वीहरुले यस क्षेत्रमा बसेर तपश्चर्या गर्नुभएको विवरण प्राप्त भएका छन् । मीरा, सूर, तुलसी धेरै समयसम्म यहाँ रहनु भएको थियो ।

चैतन्य महाप्रभु यहाँ आउनुभयो र उहाँले आफ्नो दिव्यदृष्टिले यो बताउनु भयो कि भगवान्ले कहाँ के लीलाहरु गर्नुभयो । उहाँको कथनमा विश्वास गरेर भक्तजनहरुले ती स्थानहरुमा स्मृति मन्दिर बनाए । यहाँ मध्यकालमा दसनामी सम्प्रदायको बोलवाला रहेको थियो । बल्लभ सम्प्रदाय यहीँबाट जन्मिएको थियो । दक्षिण भारतका कैयौँ आचार्य यहाँ आउनुभयो र आ-आफ्ना सम्प्रदायका मठ-मन्दिर यहाँ बनाए । वृन्दावनको स्वर्णस्तम्भ मन्दिरमा, मथुराको द्वारिकाधीश तथा विश्रामघाटको आरतीमा दर्शनार्थीहरुको समुदाय एकत्रित हुन्छन् ।

कुरुक्षेत्रमा पैदल हिंड्दै तीर्थयात्रुहरु

मोहक र मनोरञ्जक बनाएको थियो। गुरु गोरखनाथको जयकारसँगै आफ्नो भनाइ राख्नु हुँदा वातावरणमा गुरु गोरखनाथ अवतरित हुनुभएको महसुस भएको थियो। विदेशमा सम्पन्न शिविरमा गुरु गोरखनाथको जयकार गराउन पाउनु आफैमा ठूलो सौभाग्य र गौरवको विषय बनेको छ।

उक्त शिविरमा पूजनीय गुरुमाताको आगमन भएको थियो। माताजी कैलाश मानसरोवरको प्रसंगमा धेरै पटक मुस्कुराउनु भएको थियो। उहाँले कैलाश मानसरोवरको प्रसंगलाई शिविरमा पनि कोट्याउनु भएको थियो। कैलाश मानसरोवरको यात्रामा शरीर यहाँ भए पनि आफ्नो मन उतै भएको वन्दनीय माताजीले प्रसंग सुनाउनु भएको थियो। उक्त अवसरमा संस्था र यस अन्तर्गतका सम्पर्क कार्यालयहरुको तर्फबाट करिव ३० जनाले पूजनीय गुरुमाता र पूज्य अरविन्द गुरुदेवको चरणकमलमा माल्यार्पण गर्नुभएको थियो। उक्त अवसरमा पूजनीय गुरुमाता र पूज्य अरविन्द गुरुदेवले संयुक्त रूपमा कैलाश मानसरोवरको डिभिडी विमोचन गर्नुभएको थियो। यस दिन त्यहाँ नेपालबाट आएका साधकसाधिकाहरू र संस्थाको प्रशंसा भइरहेको थियो। गुरुकार्यलाई अघि बढाउने प्रेरणा नेपालका साधकसाधिकाहरूबाट पाएको प्रसंग धेरैले सुनाइरहनु भएको र बधाइ र प्रशंसाका ओइरोले हामी सद्गुरुदेवहरूप्रति नतमस्तक भयौँ।

१६ गते बिहान परमपूज्य सद्गुरुदेवको जोधपुर स्थित जन्मस्थल लुनी पुग्दा पोखराबाट तीर्थयात्राका लागि

कुरुक्षेत्रको ब्रह्म सरोवरमा स्नानको क्रममा

**कुरुक्षेत्रको जाट धर्मशालाको प्रांगणमा गुरु आरती हुँदै**

अघि नै प्रस्थान हुन पुगेको टोली पनि समावेश भएको थियो । सद्‌गुरुदेवले पढाउनु भएको लुनीस्थित राजकीय उच्च माध्यमिक विद्यालयको बाहिरैबाट अवलोकन गरियो । लुनीमा सद्‌गुरुदेवले तपस्या गर्नुभएको लुनी खोलाको पनि अवलोकन गरियो । विद्यालयको १० गजको दूरीभित्र तमाखुजन्य वस्तु सेवन गर्न निषेध गरिएको छ । उक्त विद्यालयमा सार्वजनिक पुस्तकालय पनि रहेको छ ।

सद्‌गुरुदेवको जन्मघरको अगाडि ९५ वर्षकी उहाँकी पूज्य काकीलाई पनि हामीले भेट्ने सौभाग्य प्राप्त भयो । उहाँले हामीलाई आशिष दिनुभयो । लुनीबाट पुन: हामी गुरुधाम फर्कियौँ । दोस्रो दिवसको शिविर चलिरहेको थियो । हामी सबैलाई साधना सम्पन्न गर्ने अवसर प्राप्त भएको थियो । साथै उक्त दिन गुरु प्राप्ति साधनामा भाग लियौँ र पूज्य अरविन्द गुरुदेवको बाहुलीबाट दीक्षा पनि प्राप्त गर्ने अवसर पनि सबैलाई प्राप्त भयो ।

यस दिन ८४ व्यञ्जनबाट पूजनीय गुरुमाताको साक्षात् पूजन सम्पन्न भएको थियो । यसबाट माताजी अत्यन्त प्रसन्न हुनुभएको थियो । पूजनमा पोखराका तीर्थयात्रुहरू पनि सहभागी हुनुभएको थियो । पूजा गर्ने ठाउँ भरिएको थियो । पूजनीय गुरुमाताको साक्षात् पूजन गर्ने सौभाग्य पाउँदा हामी सबैजना धन्य-धन्य भयौँ । माताजी र पूज्य अरविन्द गुरुदेव पनि खुशी हुनुभयो । पूजनपछि माताजीको श्रीचरणकमलको दर्शन गर्ने सौभाग्य प्राप्त भएको थियो ।

१७ गते अर्थात् सातौं दिन जोधपुरबाट कुरुक्षेत्रका लागि प्रस्थान भएको थियो । कुरुक्षेत्रमा महाभारत युद्ध भएको थियो । यहाँ रहेको ब्रह्म सरोवरमा स्नान गरिन्छ । यहाँ स्नान आदि गरेपछि हामी ब्रह्माको मन्दिर गयौँ । त्यसपछि गंगापुत्र भीष्मपितामह वाणशैय्या पाण्डव मन्दिर, वटुक भैरव मन्दिर आदिको दर्शन भ्रमणपछि ब्रह्म सरोवरको अति नै निकट रहेको गुरु गोर खनाथको मन्दिरमा गएर आरती गर्‍यौँ । गुरु गोरक्षनाथको विशाल प्रतिमा यस मन्दिरमा स्थापित गरि एको छ । यसमा यात्रीहरुका लागि रहने विशेष प्रबन्ध गरिएको छ । सूर्यग्रहणको अवसरमा हजारौं साधु, महात्मा यस स्थानमा एकत्रित हुन्छन् । त्यसबेला यहाँ अखण्ड भण्डारा लाग्दछ । गुरु गोरखनाथको मन्दिरमा गएर आरती गर्‍यौँ ।

**कुरुक्षेत्रको ब्रह्म सरोवरमा नमस्कार मुद्रामा सावरपन्थी सदस्य**

**कुरुक्षेत्रमा रहेको विशाल मूर्ति जसमा भगवान् श्रीकृष्ण सारथी बनेर अर्जुनको रथ हाँक्दै गर्नुभएको देखिनुहुन्छ**

**गंगापुत्र भीष्मपितामह वाणशैय्या पाण्डव मन्दिरभित्रको दृश्य**

यहाँको भव्य धर्मशालाको प्रांगणमा बेलुकीको नित्य गुरु आरती सम्पन्न भएको थियो भने गुरु गोरखनाथ मन्दिरका नाथयोगीको आगमनमा राति भजन तथा नृत्य चलेको थियो । एक रात यहाँ बसेपछि बिहानै साढे सात बजे अक्षरधामका लागि प्रस्थान गरियो । कुरुक्षेत्रबाट दिल्ली हुँदै अक्षरधाम पुग्दा बिहानको सवा दस बजिसकेको थियो। तर दिल्लीमा पुगेपछि बसका झ्यालका पर्दाहरू माथि सारेर ऐना खुलस्त देखिनु पर्ने नियम रहेछ। शायद सुरक्षाको दृष्टिकोणले होला। तर यात्राको प्रथम दिनमा सुनौली नाका कटेपछि चालकले बसका झ्यालका पर्दाहरू लाउन लगाउनुका साथै बत्ती निभाई अन्धकारमा यात्रा गराएको स्मरणले भने दिल्ली र सुनौली हुँदै अगाडि बढ्दाको यात्रामा भएको भिन्नता देखेर अचम्म लाग्यो ।

अक्षरधामको दर्शन, भ्रमणपछि त्यही क्षेत्रमा खाना खाइयो । खाना पकाउन त्यहाँ अनुमति नमिल्ने रहेछ। एजेन्सीका व्यवस्थापकले बस नै अन्त लगी खाना पकाएर ल्याई खुवाउने व्यवस्था गर्नुभएको थियो। खाना खाइवरी भगवान् श्रीकृष्णको जन्मथलो पावन मथुराका लागि प्रस्थान गर्दा रात परिसकेको थियो । रातमा मथुरा दर्शन सोचेजस्तो हुन नसके पनि तत्काल त्यहाँबाट वृन्दावनका लागि प्रस्थान गऱ्यौं । वृन्दावनको धर्मशालामा बसोबासको व्यवस्था मिलाएपछि

**तीर्थस्थलको बारेमा जानकारी लिनुहुँदै तीर्थयात्रीहरु**

## वृन्दावन

मथुराबाट १२ किमि दुरीमा उत्तर-पश्चिम यमुना तटमा वृन्दावन २७.३३ उत्तरी अक्षांश तथा ७७.४१ पूर्व देशान्तर भूमण्डलमा स्थित रहेको छ । वृन्दावन ब्रजको हृदय हो जहाँ श्री राधाकृष्णले दिव्य लीला गर्नुभएको थियो । यस पावन भूमिलाई पृथ्वीको अति उत्तम तथा परम गुप्त भाग भनिएको छ । पद्मपुराणमा यसलाई भगवान्को साक्षात् शरीर, पूर्ण ब्रह्मसित सम्पर्कको स्थान तथा सुखको आश्रय बताइएको पाइन्छ । यसै कारण यो अनादिकालदेखि भक्तजनहरुको श्रद्धाको केन्द्र बनेर रहेको छ । चैतन्य महाप्रभु, स्वामी हरि दास, श्रीहित हरिवंश, महाप्रभु बल्लभाचार्य आदि अनेकौँ गोस्वामी महान् आत्माहरुको यस वैभवलाई सजाउन, निखार्न र धर्मपरायण भक्तहरुका लागि संसारको एक अनश्वर सम्पत्तिको रुपमा प्रस्तुत गर्नमा सर्वस्व लागेको छ । यहाँ आनन्दकन्द युगल किशोर श्रीकृष्ण एवं श्रीराधा को नित्य बिहार लीला हुँदै रहन्छ ।

भोजनको व्यवस्था भयो। करिब साढे दस बजे राति भोजन गरेपछि सबैजना सुत्ने तर्खरमा थियौं । वृन्दावनको धर्मशाला तीर्थयात्राको अन्तिम विश्रामस्थल थियो । वृन्दावन क्षेत्रको दर्शन-भ्रमण गर्ने क्रममा हुस्सु परेर जाडो भएता पनि यस स्थलको अलौकिकजस्ता लाग्ने वास्तु, कला र वनावटले सबैको मनलाई मोहित बनाएको थियो। लक्खी दरवाजा, मिनाक्षी दरवाजा, गुरु गोरखनाथका भक्त राजा मानसिंहले बनाउन लगाएको साढे पाँच सय वर्ष पुरानो गोविन्द मन्दिर आदि यहाँका कलाका उत्कृष्ट नमूना थिए। पवित्र यमुनाको पनि दर्शन गरियो । मथुराको पेडाजस्तै यहाँ दही कहलिएको छ । अति नै स्वादिष्ट दही खाँदाको मजा बताउन चाहेर पनि नसकिने थियो। यहाँका बाँदरहरूको आतंक अपत्यारिलो छ। चश्मा, मोबाइल, क्यामरा त देख्नै नहुने ! थुटी हाल्ने ! टोपी देखे पनि नछोड्ने ! प्रसादका झोला इत्यादि पनि खोस्दै भाग्ने बाँदरका बथान देखेर सतर्क र चनाखो हुनुपर्ने अवस्था कैयौं स्थानमा आएको थियो। वृन्दावनको श्यामाश्याम धाम धर्मशालामा सबैले तात्तातो खाना खाएर सुत्ने तरखर गर्दाको समयमा रात परिसकेको थियो । वृन्दावन धामको दर्शन, भ्रमण किनमेल आदिपछि नेपाल फिर्ता हुनका लागि २० गते विहीबार दिनको १२:३० बाट वृन्दावनबाट आगरा, नागपुर, गोरखपुर हुँदै सुनौली आइपुग्दासम्मको यात्राको क्रममा केही ठाउँमा चियापानका लागि र केही ठाउँमा दिसा पिसाबका लागि रोकिनुको अतिरिक्त बस सिधै काठमाडौं आइपुग्दासम्म लगातार ४१ घण्टा गुडेको थियो । २१ गते शनिबार बिहान करिव ५ बजे बसुन्धरामा

**भोजनको तयारी हुँदै गर्दा पाएको क्षणको सदुपयोगमा नृत्य र भजन**

आइपुग्यौं । बसुन्धरा आइपुग्दा नपुग्दै अधिकांश यात्रुहरू चक्रपथ वरिपरि नै झरिसक्नु भएको थियो । बसुन्धरा झर्नु हुनेमा भने केही यात्रुहरू मात्र हुनुहुन्थ्यो ।

काठमाडौं फर्कने क्रममा परेको नवलपरासी जिल्लाको चोरमारामा रहेको श्री मध्य विन्दु कैलाशेश्वर मन्दिरमा आइपुग्यौं । खाना यही ठाउँमा तयार हुँदै थियो । मन्दिर दर्शनका लागि जानु भएकाहरू छक्क पर्दै हुनुहुन्थ्यो । यसको कारण खोतल्दा थाहा भयो– मन्दिरभित्र सजाइएको सद्गुरुदेवहरूको फ्लेक्स । यात्रुहरू चकित पर्दै, उत्साहित हुँदै, भावविभोर हुँदै सद्गुरुदेवहरूलगायत भगवान् शिवको दर्शन गर्दै हुनुहुन्थ्यो । मन्दिरका पुजारी बलराम चौवेसित भेट भएपछि थाहा भयो– यहाँ गुरु गोरखनाथको मन्दिर निर्माणार्थ समिति बनेको छ । समितिले चाँडै नै गुरु गोरखनाथको मन्दिर निर्माणको जिम्मेवारी लिएको छ । मन्दिर निर्माणका लागि थुपारिएका ढुंगाहरू पनि हामीले देख्यौं । त्यो देखेपछि हामीलाई अझै आनन्द आयो । यहाँ पूर्व राजा ज्ञानेन्द्र शाह दर्शनका लागि आउनु भएको जानकारी पनि पुजारीबाट प्राप्त भयो ।

१२ दिनको लामो तीर्थयात्रालाई भव्यता दिने क्रममा, यसलाई निर्विघ्न रूपमा सम्पन्न गराउने क्रममा, यसको आयोजनामा प्रत्यक्ष अप्रत्यक्ष रूपमा सहभागी हुने क्रममा सबै नै प्रशंसा र धन्यवादका पात्र हुनुहुन्छ। सिद्धाश्रम शक्ति केन्द्र सबैप्रति धन्यवाद ज्ञापन गर्दछ। यात्रुहरूलाई तीर्थहरूको भ्रमण गराउने क्रममा चौधरी यात्रा कं. ट्राभल एजेन्सीलाई विशेष धन्यवाद दिनु पर्ने हुन्छ । भोजन, नास्ता गराउनेदेखि लिएर शौच इत्यादिको समयमा गाडी रोकेर सहयोग पुऱ्याउनु हुने यस ट्राभल एजेन्सीका सबै कर्मचारीहरूप्रति धन्यवाद व्यक्त गर्दछौं । त्यस्तै यात्राको क्रममा स्थान उपलब्ध गराएर भोजन, नास्ता तयार गर्न सहयोग गर्ने सम्पूर्णप्रति पनि धन्यवाद ज्ञापन गर्दछौं। शौच इत्यादिको बेला आफ्नो शौचालय उपयोग गर्न दिएर सहयोग गर्नेहरू सम्पूर्णप्रति पनि धन्यवाद व्यक्त गर्दछौं ।

तीर्थयात्राको अत्यधिक पुण्य र माहात्म्य त छ नै, यसका साथै यसको पछाडि पुण्य परमार्थको धर्म प्रयोजन पनि होस् । वस्तुत: धर्म प्रचारको पदयात्रालाई नै तीर्थयात्रा भनिन्छ । मानिसहरूले यस उद्देश्यलाई बिर्सिसकेका छन् । रेल, गाडीहरूमा ठेलमठेल गरेर तीर्थयात्रा हुने समयमा सिद्धाश्रम शक्ति केन्द्रको आयोजनामा सम्पन्न यस तीर्थयात्रामा कुनै थकान भएन, कुनै गुनासो रहेन । सर्वत्र, सदा आनन्दै आनन्द रह्यो, स्वास्थ्यसम्बन्धी गुनासो हुन पाएन, सबै तीर्थयात्रापूर्वभन्दा ऊर्जायुक्त, जोश, जाँगरले भरिएको देखिनुहुन्थ्यो । सबै आनन्दोत्सवमा रम्नुभएको झैं, सबै खुशीमा तत्मय हुनुभएको झैं लाग्दथ्यो । यात्रुहरूको जोश, जाँगर प्रतिपल बढेको देखिन्थ्यो । तीर्थयात्राको पुण्यलाई कायम राख्न आवश्यक पर्ने शान्ति, स्थिरता, प्रसन्नता सबैमा विद्यमान देखिन्थ्यो । यी सबैका लागि परमपूज्य सद्गुरुदेवहरू, पूजनीय गुरुमाता एवं पूज्य अरविन्द गुरुदेव र सम्पूर्ण देवीदिवताहरूको चरणकमलमा कोटिकोटि प्रणाम अर्पण गर्दछौं, धन्यवाद व्यक्त गर्दछौं, सदा नतमस्तक हुँदै आफ्ना शिर नुहाउँदै यस जीवनलाई सदा उहाँहरूको छत्रछायाँमा हराभरा गर्दै लोक-कल्याणमा नै उत्सर्ग गर्दछौं ।

परमपूज्य सद्गुरुदेवले भन्नु भएको आत्मिक परिवारको एउटा ज्वलन्त नमूना यस तीर्थयात्रामा देखा परेको थियो । सबैजना मिलेर एक आपसमा आत्मिक भाव प्रदर्शन गर्दै सबैतिर एक अर्कोलाई सहयोग गर्दै र सद्भाव अर्पण गर्दै यात्रामा अघि बढ्नु निकै प्रशंसाको पक्ष थियो भने यही पक्ष अध्यात्मको क्षेत्रमा सधैं अपेक्षित हुन्छ । यसरी यस तीर्थ यात्रालाई आत्मिक यात्रा भने पनि फरक नपर्ने हुन्छ । यस आत्मिक यात्राबाट परमार्थको धर्म प्रयोजन पनि सिद्ध भएको छ भने तीर्थाटनको विविध लाभ पनि हासिल भएको छ । यस्तो अवसर सबैलाई आओस्, बारम्बां आओस्, यही शुभेच्छा प्रकट गर्दछौं ।

*जय गुरुदेव !*

---

सन्दर्भग्रन्थ:
पं. श्रीराम शर्मा आचार्य वाङ्मय, तीर्थ सेवन क्यों ? और कैसे ?
कुरुक्षेत्रका इतिहास, रमेश प्रकाशन (कुरुक्षेत्र)
सचित्र ब्रज गाइड, भार्गव प्रकाशन, शीतला घाटी, मथुरा ।

# तीर्थ दर्शनक

तर जुन पुण्यलाभको माहात्म्य तीर्थ-मन्दिरहरुको सम्बन्धमा बताइएको पाइन्छ, त्यसको सम्भावना तब बन्न सक्छ जब त्यसको अवलोकनबाट श्रद्धा जाग्दछ । श्रद्धा प्रज्ञामा बदलियोस् र प्रज्ञाको प्रखरता क्रियाकलापहरुलाई दिशा दिने निष्ठामा परिणत होस् । यति तारतम्य बन्न सकेन, तालमेल हुन पाएन भने सम्फनु पर्दछ कि दर्शनको सत्परिणामको सम्बन्धमा जे कल्पना गरिएको छ, त्यसको आधार नहुनाले तदनुरुप प्रतिफलको अलिकति पनि सम्भावना रहेन ।

आजभोलि तीर्थ सेवनको प्रचलित पक्ष भनेको 'दर्शन' मात्र रहन गएको छ । आजभोलि हुने तीर्थहरूको पर्यवेक्षण दर्शन अर्थात् तत्त्वज्ञान नभई आँखाद्वारा हुने दृश्य सेवन नै सन्त र देवालयहरूको सम्बन्धमा प्रयुक्त हुन्छ । फलत: यसको कुनै पनि लाभ मिल्न सक्दैन । गान्धीजस्तो महामानवलाई पनि दिनदिनै हेरिरहने, देखिरहने छिमेकीहरू तथा कर्मचारीहरू त्यस दर्शनबाट अलिकति पनि लाभान्वित भएनन् । मन्दिर हरूमा सफाई, खाना पकाउने, चौकीदारी आदि कार्य गर्नेहरूमा भक्तिभावको संचार कसरी हुन सक्ला ? भक्तिभाव भएन भने स्वर्ग, मुक्ति सद्गति अथवा मनोकामनाको पूर्तिको विश्वास उठ्छ नै कसरी ? आँखाले हेरेर त कुनै वस्तु, दृश्य वा प्राणीको स्वरूपको जानकारी मात्र प्राप्त हुन्छ । पुण्यफलको सीधा सम्बन्ध त चिन्तन वा चरित्रबाट हुन्छ । कुनै पनि दर्शनले यदि यस प्रयोजनको पूर्ति गर्न सक्यो भने यो बुझ्नु पर्दछ कि पुण्यफलको सम्भावना बन्यो र दृश्य सेवनका लागि गरिएको दौडधुप सार्थक भयो । भवनहरू, प्रतिमाहरूको दर्शनले जानकारी मात्र मिल्दछ । नदी, तलाउमा स्नानबाट शीतलता, स्वच्छता उपलब्ध हुन्छ तर जुन पुण्यलाभको माहात्म्य तीर्थ-मन्दिरहरूको सम्बन्धमा बताइएको पाइन्छ, त्यसको सम्भावना तब बन्न सक्दछ जब त्यसको अवलोकनबाट श्रद्धा जाग्दछ । श्रद्धा प्रज्ञामा बदलियोस् र प्रज्ञाको प्रखरता क्रियाकलापहरूलाई दिशा दिने निष्ठामा परिणत होस् । यस्तो तारतम्य बन्न सकेन, हुन पाएन भने सम्फनु पर्दछ कि दर्शनको सत्परिणामको सम्बन्धमा जे कल्पना गरिएको छ, त्यसको आधार नहुनाले तदनुरूप प्रतिफलको अलिकति पनि सम्भावना रहेन ।

अध्यात्म क्षेत्रमा जुन दर्शनको महिमा गाइएको छ, त्यसको पछाडि एउटा अर्को तथ्य जोडिएको छ भन्ने बुझ्नु पर्दछ कि जुन देखा परेको छ, त्यसको पछाडि उत्कृष्टता उठाउने कुनै उच्चस्तरीय प्रेरणा जोडिएको छ कि छैन । यदि छ भने त्यसको अनुभूतिको अन्तरालमा कति उमंग बनेर उठ्यो । त्यस उठानले जीवन क्रममा कुन स्तरको परिवर्तन प्रस्तुत गर्‍यो । यति विस्तृत पर्यवेक्षणपछि नै यो भन्न सकिन्छ कि देवप्रतिमा, साधुसन्त, तीर्थक्षेत्र, नदी-तलाउ आदिको सान्निध्य-अभिवन्दन सफल सार्थक बन्यो वा बनेन ।

तीर्थहरूको दर्शन-झाँकीलाई आजभोलि प्रधान मान्न थालिएको छ जबकि पहिलेको परम्परा त्यस स्थानहरूमा बनेका प्राण-चेतना उठाउने प्रशिक्षण-पाठ्यक्रममा निर्भर थियो । मानिसहरू आँखाले प्रकृति शोभा एवं ऐतिहासिक स्मारकहरूबाट पनि उत्साह प्राप्त गर्दथे तर वास्तविक लाभ विचारणा र भावनामा उत्कृष्टता अभिवर्धनको उपक्रमबाट नै सम्भव हुन्थ्यो । यसपछि ती स्थानहरूमा गएर गरिएका साधनाहरू अनुकूल वातावरणको सहारामा अधिक फल देखाउनुका साथै चमत्कार पनि उत्पन्न गर्दथे । तेस्रो प्रकरण त्यस प्रायश्चित-परिशोधनको

# को पुण्यफल

हुन्थ्यो जुन तीर्थमा पुगेर अवश्य गरिन्थ्यो । तीर्थहरूमा कपाल खुइलाउने परम्पराले अहिले पनि त्यस प्रायश्चित प्रक्रियाको स्मरण दिलाउँछ । तीर्थयात्राको समय अवधिमा धर्म प्रचारको पदयात्राको पनि समावेश हुन्थ्यो । द्रुतगामी वाहनहरूमा चाँड चाँडो प्रतिमाहरूको झाँकीबाट मात्रै पुण्य लुट्नेहरूलाई आफ्नो समयको भ्रान्तिहरूमा पालिएको हुर्केको बुझ्नु, मान्नु पर्ने हुन्छ । पहिले तीर्थयात्रा धर्म प्रचारका लागि जनजागरणको वातावरण बनाउने पदयात्राको रूपमा प्रचलित थियो । पिछडिएका क्षेत्रहरूको

यो अमृतोपम सेवा-साधना हो । तीर्थहरूमा दानपुण्यको अनिवार्यता हुँदैन । यसका लागि जीवितहरूको संस्कार एवं मृतकहरूका लागि श्राद्ध-तर्पणजस्ता क्रिया-कृत्य तीर्थ पुरोहितहरूद्वारा गराइन्थे । यस बहानाले उनीहरूलाई आश्रमहरूलाई जीवन्त-प्रखर बनाउनका लागि दक्षिणाको रूपमा उदार सहायता दिइने गरिन्थ्यो, यसको अधिकारी तीर्थ पुरोहित नै हुन्थे । उनीहरू यसलाई आफ्नो अधिकार पनि मान्दथे । यहाँ तीर्थ पुरोहितहरूको अर्थ ती आरण्यमा चल्ने प्रशिक्षण प्रक्रियाका अध्यापक एवं सूत्र संचालकहरूलाई बुझ्नु पर्दछ । वंश वा भेषको आधारमा कसैलाई पनि प्रतिग्रह माग्ने अधिकार हुँदैन । यही थियो तीर्थ वा त्योसित सम्बन्धित क्रियाकलाप, तदनुरूप प्राप्त हुने पुण्यफलको उपक्रम । यही हो सनातन तथ्य जसको आधारमा तीर्थको महिमा गाइएको थियो र त्यहाँ पुगेपछि पुण्यफलको आशा दिइन्थ्यो । आधार यही हो भने तीर्थ सेवनको त्यस्तै नै परिणाम प्राप्त हुनुपर्दछ जस्तो शास्त्रकार, आप्तजनहरूले बताउनु भएको छ ।

तीर्थ-दर्शनका लागि जानेहरूले धर्म प्रयोजनसित सम्बन्धित जे पनि नमन वेदीहरू हेर्ने अवसर पाउँछन्, त्यसको इतिहास उद्देश्यको परिचय प्राप्त गर्नुपर्दछ र सोच्नु पर्दछ कि यस अवसरमा त्यस दृश्य दर्शनबाट के प्रेरणा प्राप्त हुन्छ र परिशोधन परिष्कारको सन्दर्भमा कस्तो उत्साह उत्पन्न गर्दछ । त्यसै त भिन्नभिन्न तीर्थ देवालयहरूका साथ आ-आफ्ना निमित्त कारण वा घटनाक्रम पनि जोडिएका छन् तर तथ्यत: उनीहरूमध्ये अधिकांशको पृष्ठभूमि एउटै हुन्छ–

१) कुनै महामानव तपस्वी त्यहाँ बस्नुभएको थियो र आत्मकल्याण, लोककल्याणको पुण्य प्रयोजनमा निरत रहेको होऊन् ।

२) कुनै देवताले कुनै साधकको सदाशयताबाट प्रसन्न भएर उसलाई वरदान सहयोग दिनुभएको होऊन् ।

३) कुनै यस्तो घटना भएको होस् जसमा आदर्शवादिता अपनाउन, परमार्थका लागि कुनै त्याग बलिदानको इतिहास होस् ।

४) कुनै महत्त्वपूर्ण निर्धारण वा शुभारम्भ समापन भएको होस् ।

५) कुनै महामानवको जन्मस्थान वा महान् क्रियाकलापहरूको कार्यक्षेत्र रहेको होस् ।

६) त्यस स्थानको आफ्नो प्राकृतिक विशेषता रहेको होस्, यिनै परिधिमा प्राय: हरेक तीर्थको स्थापना, परम्परा, गरिमाको मूल्याङ्कन गर्न सकिन्छ ।

मिठाइको पसलमा अनेकौं मिठाईहरू सजिएका हुन्छन् तर तिनको मूलमा अन्न, चिल्लो, गुलियोका तीन सामग्रीहरूको नै उपयोग भएको पाइन्छ । कुनै पनि तीर्थ किन नहोऊन्, त्यसको आकृति एवं विधि-व्यवस्था जे सुकै भए पनि मूलमा त्यही तत्त्व समन्वित दृष्टिगोचर हुन्छ जसको चर्चा माथिको पङ्क्तिमा गरिएको छ । यो दृष्टिकोण लिएर जाने हो र जुनसुकै अभिनन्दनीय पूजार्ह

मिठाइको पसलमा अनेकौं मिठाईहरु सजिएका हुन्छन् तर तिनको मूलमा अन्न, चिल्लो, गुलियोको तीन सामग्रीहरुको नै उपयोग भएको पाइन्छ । कुनै पनि तीर्थ किन नहोऊन्, त्यसको आकृति एवं विधि-व्यवस्था जे सुकै भए पनि मूलमा त्यही तत्व समन्वित दृष्टिगोचर हुन्छ ।

प्रतिष्ठानमा देखा पर्दछ, त्यसका बारेमा जानकारी भएकाहरूबाट पत्ता लगाउनु पर्दछ कि त्यस प्रतिष्ठानको पछाडि यसको इतिहास एवं उद्देश्य के हो ? यदि कुनै विज्ञजनद्वारा उत्तर प्राप्त हुन्छ भने त्यसमा यस्ता कारणहरूको अवश्य समावेश भएको पाइनेछ जो आदर्शवादिताको पक्षधर रहनुभएको थियो र आज पनि जनसाधारणलाई केही उपयोगी प्रकाश, उत्साह प्रदान गर्नमा समर्थ हुनुहुन्छ । सोधाइमा पनि सावधानी राख्नुपर्ने हुन्छ । कुनै अतिआदि वा निहित स्वार्थको प्रतिनिधित्व गर्नेसित सोध्ने हो भने उसको उत्तर यही हुनेछ–

१) यहाँ अमुक देवता प्रकट हुनुभएको थियो र विलक्षण चमत्कार देखाउनु भयो ।

२) यहाँ अमुकको मनोकामना पूर्ण भएको थियो ।

३) यस स्थानमा आउँदा र दक्षिणा चढाउनाले देवता प्रसन्न हुन्छन् र मनलाग्दो वरदान दिनुहुन्छ ।

४) गरिएका पापहरू नष्ट हुन्छन् र कुकर्महरूको फल भोग्न पर्ने हुँदैन ।

५) दर्शन वा स्नान गर्नासाथ नै स्वर्ग-मुक्तिमाथि अधिकार हुन्छ । यी सबै कुरा तथ्य, तर्क र प्रमाणबाट रहित यस्ता कुकल्पनाहरू हुन् जसबाट देवताहरूको नीतिवान्, न्यायनिष्ठामाथि प्रश्नचिन्ह लाग्दछ र ती उद्धत आचरण गर्ने, खुशामदबाट फुल्याउने तथा केही घुस पाएर कसैको पनि पक्षपात गर्ने सिद्ध हुन्छन् । विचारणीय छ कि देवतालाई यदि पवित्रता पराक्रम एवं परमार्थ परायणतासित मतलब छैन र जुन वन्दन-चन्दन पाउँदा मात्रै पनि कसैलाई कुनै पनि तरिकाले निकाल्न सक्नुहुन्छ भने यसबाट कर्मफल सिद्धान्तलाई झूटो सावित गर्दछ भने उहाँ देवताको स्तरमा अभिनन्दनीय रहनुहुन्छ नै कसरी ? यस्तो पक्षपात र अनीति आचरण त क्षुद्र मानिस पनि गर्दैनन् जसरी क्षुद्र प्रलोभन्तिपछाडि देवताहरूले गर्नुभएको देखाइएको हुन्छ । यस्ता निरर्थक किंवदन्तीहरूका पछाडि कुनै पनि विचारशीलले विश्वास गर्नु हुँदैन । महान्को महानताको रहस्य थाहा पाएर आफ्नो व्यक्तित्वमा महानताको अभिवर्धन गर्ने प्रेरणालाई आफ्नै सूक्ष्मदर्शिताको सहारामा खोजेर निकाल्नु पर्दछ । त्यसलाई अपनाएर परिशोधन, परिष्कारको मार्गमा हिँड्न स्वयं नै तानाबुना बुन्नु पर्दछ । यही हो तीर्थ दर्शनको तत्त्व ज्ञान, रहस्य र भावले भरिएको अनुदान । *जय गुरुदेव !*

गुरु आश्रम निर्माणमा सहयोग गरौं
दान गरौं पूण्य कमाऔं ।
यस पुनीत कार्यमा नगद तथा जिन्सी
सहयोग गर्न सकिनेछ ।
सहयोग गर्न आश्रममा
सम्पर्क राख्नुहुन वा
जनता बैंकको
खाता नं. ००११०२००५८३५५०१
मा नगद जम्मा
गर्न सक्नुहुनेछ ।
भवन निर्माण उपसमिति
सम्पर्कः
सिद्धाश्रम शक्ति केन्द्र
बसुन्धरा, काठमाडौं, फोनः २१००१५३
मोः ९७४११५३६९६, ९८५१०४८२७४, ९८५१०३६९१७

# २
# त्मिक शक्तिको
# प्राप्ति

वेदेशी धर्म-प्रचारक हिन्दुधर्ममाथि प्राय: यो आक्षेप लगाउने गर्दछन् कि हिन्दुधर्म एक ईश्वर अथवा परमात्माबाहेक ३३ करोड देवताहरूलाई मान्ने र पशु, रूख, पत्थर र ई पूजा गर्ने तल्लो दर्जाको धर्म हो । तर वास्तवमा यो आरोप । उनीहरूले अज्ञानताले गर्दा बुझ्न सकेनन् अथवा जानी जानीकन र गर्ने प्रयास गरिरहेका छन् । अन्य धर्मले जस्तै हिन्दुधर्मलाई पनि के परमात्मा तथा ईश्वर एकै हुनुहुन्छ चाहे उहाँको शक्तिको असङ्ख्य रूपमा भएकै किन होस् । वास्तविकता यो हो कि कुनै श्वरवादको जति नै चर्चा गरे पनि निर्गुण परब्रह्मको स्वरूपलाई नु अथवा उहाँको वास्तविकतालाई आफ्नो बुद्धिद्वारा ग्रहण गर्न सक्नु ठूलाभन्दा ठूला विद्वान्हरूका लागि पनि अति कठिन छ । भगवान् बुद्धले आफ्ना शिष्यहरूसित भन्ने गर्नुहुन्थ्यो कि यस्तो कठिन विषयको सम्बन्धमा केही पनि विचार गर्नुहुन्न किनकि यस विषयमा कुनै पनि निर्णय गर्न सक्नु असम्भव छ र यसबाट केही पनि लाभ मिल्न सक्दैन । यसैले भारतवर्षका ऋषिमुनिहरूले धर्मको कुरालाई यस्तो बुद्धिगम्य र व्यवहारिक रूप दिए कि जसबाट मानिसहरू क्रमश: आध्यात्मिक मार्गमा अग्रसर हुँदै जाऊन् र समय आएपछि आत्मा र परमात्माको सत्य स्वरूपलाई पनि बुझ्ने योग्यता प्राप्त गर्न सकून् । यस सम्बन्धमा इसाई धर्मका आचार्य र आध्यात्मिक विषयमा अति रुचि राख्ने एक विदेशी विद्वान्ले हिन्दु मन्दिर, तीर्थ स्थान र तिनमा प्रतिष्ठित मूर्तिहरूको वास्तविकतामाथि अति नै विवेकपूर्ण र तर्कसंगत विवेचना गरेका छन् । यहाँ उहाँकै लेखका केही कुराहरू दिइन्छ–

'हिन्दु देवताहरूको मूर्तिहरूमा धेरै नै ओजस् शक्ति भरिएको हुन्छ । उत्सवहरूको अवसरमा जब यी मूर्तिहरूलाई जुलुसको रूपमा निकाल्दा समयमा दर्शकहरूमा त्यसको राम्रो प्रभाव पर्दछ । धेरै मन्दिर र तीर्थहरूमा अहिले पनि आध्यात्मिक शक्ति उत्पन्न गर्ने धार्मिक क्रियाहरू हुने गर्दछन् र त्यहाँ जानाले र त्यहाँको प्रसाद ग्रहण गर्नाले मानिसको हृदयमा अवश्य नै श्रेष्ठ भावको उत्पत्ति हुन्छ ।'

‘हिन्दु देवताहरुको मूर्तिहरुमा धेरै नै ओजस् शक्ति भरिएको हुनछ । उत्सवहरुको अवसरमा जब यी मूर्तिहरुलाई जुलुसको रुपमा निकाल्दाखेरि दर्शकहरुमा त्यसको राम्रो प्रभाव पर्दछ । धेरै मन्दिर र तीर्थहरुमा अहिले पनि आध्यात्मिक शक्ति उत्पन्न गर्ने धार्मिक क्रियाहरु हुने गर्दछन् र त्यहाँ जानाले र त्यहाँको प्रसाद ग्रहण गर्नाले मनुष्यको हृदयमा अवश्य नै श्रेष्ठ भावको उत्पत्ति हुन्छ ।’

भारतवर्ष वास्तवमा क्रियाकाण्ड र विधिहरूको देश हो । यहाँको धर्म यसैबाट भरिएको छ र अनेकौं विधिहरू त युगौंदेखि चलिआएका छन् । तर यो पनि निश्चित नै हो कि धेरैजसो क्रियाहरू पछि आएर जोडिएका पनि हुन् । यसमध्ये कतिपय यस्ता क्रियाहरू छन् जुन जातिको आरम्भमा अति आवश्यक हुन्छ, तर आर्य जाति पूर्ण रूपमा विकसित भएपछि त्यसको कुनै काम रहेन । धेरै क्रियाहरू भएका बेला वास्तवमा तिनको के अर्थ रहेको थियो भन्ने तिनीहरूलाई हेर्नाले स्पष्ट थाहा हुन्छ । तर परिस्थिति बदलिएपछि तिनीहरू अर्थशून्य हुन गए र तिनीहरूबाट कुनै पनि फल उत्पन्न हुँदैनन् । वास्तवमा ती क्रियाहरू अथवा विधिहरू बिना कामै चल्दैनन् भन्ने पनि होइन । उन्नति प्राप्त पुरुषहरूलाई यो बन्धन रहँदैन, चाहे उहाँहरूले लोक-रीतिका कारण तिनको पालन गर्दै रहून् ।

तर सबैभन्दा ठूलो कुरा त यो हो कि आजभोलि धर्मका क्रिया गराउने पुरोहितमा त्यस शक्तिको अभाव हुँदै गएको पाइन्छ, जसको आधारमा पहिले यी क्रियाहरू साक्षात् फल दिने हुन्थे । आजभोलि यिनीहरू आफ्नो इच्छाशक्तिको प्रयोग गर्दैनन् । उनीहरू मन्त्र त पढ्छन् । तर यसको उच्चारणबाट फल उत्पन्न हुँदैन । पूर्वकालमा आचार्यहरूले मन्त्रको उच्चारण गर्ने बेलामा आफ्नो इच्छाशक्ति पनि त्यसमा लगाउँथे र आफ्नो तथा उपस्थित प्रभावग्राही वा कोमल प्रकृति भएका मानिसहरूको चेतना मन्त्र उच्चारण गर्ने बेला एक लोकबाट दोस्रो लोकसम्म पुऱ्याइदिन्थे । यो कुरा ठीक हो कि यस प्रकारको असर थोरै समयका लागि रहन्थे र क्रिया समाप्त भएपछि त्यसमा सहभागी हुनेहरूमा माथिल्ला लोकहरूको चेतना पनि जान्थ्यो । तर उनीहरूका लागि यो एउटा महत्त्वपूर्ण अनुभव हुन्थ्यो र दोस्रो पटक यस्तो क्रिया भएको बेला तिनीहरूमा उच्च स्तरको चेतना पनि जागृत हुन्थ्यो । यस प्रकार उपासकहरूको आत्मिक शक्तिको निरन्तर विकास हुँदै रहन्थ्यो । तर आजभोलि यस्तो कार्य शायदै कहीं हुन्छ । आजभोलि आचार्य हवन कुण्डमा समिधा राखेर अग्नि आवाहनका लागि मन्त्र पढ्दछन् र फेरि सलाई आदिले अग्नि प्रज्ज्वलित गर्दछन् । प्राचीनकालमा अग्निका अधिष्ठाता देवता पुराना कथाहरूमा बताइए जस्तै गरी यथार्थमा आउनुहुन्थ्यो । यसको कारण यही थियो कि त्यस बेला सबै आफ्नो इच्छाशक्तिको पनि प्रयोग साथसाथै गर्दछन् । अब ती क्रियाहरूको बाहिरी रूप मात्रै रहन गएको छ, जसबाट फल पनि नाम मात्रैको प्राप्त हुन्छ ।

तीर्थयात्राको प्रथा पनि बिल्कुलै तर्क र विज्ञानबाट सिद्ध छ । जहाँ कुनै पवित्र मनुष्यको आश्रम रहेको छ अथवा जहाँ दीक्षासमान् कुनै महत्त्वपूर्ण कार्य भएको होस्, उहीं प्राय: ठूलठूला मन्दिर बनाइन्थे । यी मन्दिरहरू कहिलेकाहीं कुनै महापुरुषको अस्थिमा पनि बनाइएको थियो । यस प्रकारका मन्दिर चाहे त्यो कुनै पनि उद्देश्यबाट बनाइएको होस्, दृढ ओजस्को केन्द्र हुन जान्थे जुन सैयौं-हजारौं वर्षसम्म पनि स्थिर रहन सक्दछ । जब कुनै प्रभावग्राही वा कोमल प्रकृतिका व्यक्ति यस्तो स्थानमा पुग्दछ तब उसलाई यसको असरको बारेमा ज्ञान हुन्छ र यस असरबाट नि:सन्देह उसलाई लाभ पुग्दछ । जहाँ उच्च स्तरको कम्पन हुन्छ, त्यसले आफ्नो क्षेत्रमा भित्र आउने मनुष्यहरूको कम्पन तथा चेतनालाई आफ्नो उचाइसम्म उठाउँदछ । यदि कुनै यात्री यस्तो स्थानमा कैयौं दिनसम्म रहन्छ र उसमाथि त्यहाँको ओजस्को असर पर्दछ भने अवश्य नै उसलाई आत्मिक लाभ हुन्छ । तर यो लाभ भिन्न-भिन्न मानिसहरूलाई आफ्नो प्रभाव ग्रहण गर्ने योग्यता वा स्वभावअनुसार नै कम वा धेरै मिल्न सक्छ ।

कुरुक्षेत्रको गुरु गोरखनाथ मन्दिरका नाथयोगीका साथ तीर्थयात्रीहरु

खाना बनाउने तरखर

नृत्यको एक झलक

तीर्थयात्रीहरुका लागि रोटी सेकिँदै

समूह तस्बिर खिचाउँदै तीर्थयात्रीहरु

धर्मशालामा सुत्ने तरखरमा तीर्थयात्रीहरु

तीर्थयात्राको क्रममा

तीर्थस्थानको बारेमा जानकारी लिनुहुँदै तीर्थयात्रीहरु

# तीर्थ परम्पराम

तीर्थ परम्परा पछाडि सन्निहित उद्देश्य र आदर्श

प्राचीनकालमा गुरुकुल शिक्षा पद्धति छात्रहरूको शिक्षण व्यवस्था थियो । ऋषिहरूको सान्निध्यमा शिक्षार्थी अध्ययन गर्दथे र दिव्य सान्निध्य एवं प्रशिक्षणद्वारा समग्र रूपमा विकसित व्यक्तित्व लिएर फर्कन्थे । यस्ता गुरुकुल कहाँ थिए भन्ने जानकारीका लागि प्रयास प्रयत्न गर्दा तिनका भव्य भवनहरूको कहीं पत्तो लाग्दैन, शिक्षाको यति धेरै विस्तार र तिनका लागि बनाइएका स्थानहरूको कुनै पत्तो लाग्दैन । यी आश्चर्यहरूको कारणको खोजी गर्दा ज्ञात हुन्छ कि ती गुरुकुल त घुम्ती थिए । ऋषिहरू आफ्ना छात्र तथा गाईहरूसहित परिभ्रमण गर्दथे र सुविधाजनक स्थानहरूमा बस्दथे । केही समय बसेर फेरि अगाडि बढ्ने तयारी गर्दथे । यसप्रकार भ्रमणशील विद्यालयहरूको माध्यमबाट अध्ययन अध्यापनको क्रम चल्दै रहन्थ्यो । त्यसको समीपवर्ती क्षेत्रका जनताहरूले पनि यसको लाभ उठाउँदथे । ऋषि सम्पर्कको सौभाग्य आफूनजिक आएको देखेर जनसाधारणलाई ठूलो बल मिल्दथ्यो । छात्रहरूको अध्ययन तथा जनसाधारणको लोक शिक्षण साथसाथै चलिरहन्थे ।

ठूला तीर्थहरूको स्थापनाको उद्देश्य ठूलै हुन्थ्यो । स-साना तीर्थ, देवस्थान, धर्मस्थान ठाउँ-ठाउँमा बनेका देखिन्थे । यसको

# मा सन्निहित

पछाडि ऋषिहरूको निवास एवं प्रशिक्षण प्रक्रियाको स्मारक बुझ्न सकिन्छ । स्थान छोड्नुपूर्व नै वा पछि नै त्यस सत्प्रवृत्ति चल्दै रहने व्यवस्था बन्दथ्यो अथवा उहाँहरू विदा भएपछि प्रभावित व्यक्ति यो प्रयत्न गर्दथे कि स्थापित परम्परा नष्ट नहोस्, धर्म-धारणको त्यो प्रवृत्ति कुनै प्रकारले भविष्यमा पनि चल्दै रहोस् । यस्तो विचारले देवालय बनाइन्थे । यिनै धर्म-चेतनाहरूका केन्द्रको स्थान नै मान्नु पर्दछ । जहाँ देव-प्रतिष्ठादेखि लिएर धर्म-धारणालाई सुस्थिर एवं प्रगतिशील बनाउने अनेकौं रचनात्मक गतिविधिहरू चल्दै रहन्थे । अधिकांश देव-मन्दिरहरूका साथ अतिथि निवासका लागि धर्मशाला र अध्ययनका लागि पाठशालाको व्यवस्था एक आपसमा जोडिएर रहेका हुन्थे ।

कथा-प्रवचनहरूको क्रम त्यहाँ नियमित रूपले चलिरहन्थे । घरमा संस्कारहरूको सामुहिक रूपले पर्वोत्सव मनाउने विधि व्यवस्थाको उत्तरदायित्व यी देवालयका संरक्षकहरूले चलाउँदथे । पुरोहित, पुजारी एवं धर्म-प्रचारकको भूमिका निभाउनका लागि न्यूनतम एक वा बढी जति सम्भव हुन्छ, उहाँहरूका लागि निवासको व्यवस्था त्यहाँ रहन्थे । यही थियो देवालयहरूको त्यो स्वरूप जुन गुरुकुलका संचालक मनीषिहरूको प्रेरणाबाट बन्दै बढ्दै अगाडि बढ्दथे । ठाउँ ठाउँमा साना-ठूला प्राचीन देवालयहरूको निर्माण यसरी नै, यिनै उद्देश्यका लागि हुन्थे । साना तीर्थहरूको देव संस्थानहरूको यति अधिक विस्तार प्राय: यसैको आधारमा भएका थिए ।

धर्मक्षेत्रका महामानवहरूले स्वयं अथवा उनीहरूका अनुयायीहरूले पछि तीर्थ स्थापनालाई आवश्यक सम्झे तथा तिनीहरूको भावपूर्ण निर्माणको व्यवस्था गरे । समर्थ गुरु रामदासले महाराष्ट्रमा यस्ता अनेकौं देवालयहरूको स्थापना गर्नुभएको थियो जसमा स्थानीय धर्म-चेतना जीवन्त राख्नुका अतिरिक्त शिवाजीको सहायताका लागि सैनिक, शस्त्र तथा साधन पनि संग्रह गरिन्थे र पठाइन्थे । भगवान् बुद्धका महत्त्वपूर्ण गतिविधिहरू जहाँसुकै चलिरहेको भए पनि तत् तत् ठाउँमा उहाँहरूको साम् वा पछि पनि तीर्थ स्थानहरू बने । सन्तहरूको जीवनचर्या उहाँहरूपछि पनि तीर्थको रूपमा प्रेरणा केन्द्र बनेर गतिशील रहे र त्यो आलोकले अद्यावधि कुनै न कुनै रूपमा आफ्नो रश्मि वितरित गरिरहेको छ ।

भगवान्का विभिन्न अवतारहरूको क्रियाकलाप जहाँ अधिक महत्त्वपूर्ण प्रेरणा प्रस्तुत गर्दै रहेका थिए, उहीं भक्तजनहरूले तीर्थहरूको स्थापना गरे । भगवान् राम र कृष्णको लीलाहरूको स्मरण दिलाउने अनेकौं तीर्थ उहाँहरूको लीलाभूमिमा अहिले पनि विद्यमान छन् । यस निर्माणको एकै उद्देश्यको परिचय प्रकाश तथा उत्साह त्यहाँ पुगेपछि प्राप्त हुन सकियोस् । भगवान्को शरीर नरहे पनि उहाँको उद्देश्यको

बनेका छन् । स्वामी नारायण सम्प्रदायमा पनि यस्तै भएका छन् । उनीहरूका धर्मगुरुले जहाँ पनि महत्त्वपूर्ण कृत्य गर्नुभयो, प्राय: ती सबै स्थानहरूमा देवालय बनेका छन् ।

तीर्थहरूको प्रयोजन प्रेरणाहरूलाई देवालयहरूसित जोडेर जनसम्पर्क साधना र त्यस आलोकबाट लोक श्रद्धालाई प्रभावित गर्नु रहेको छ । यस प्रयोजनबाट जहाँबाट जुन प्रकारले जुन सीमासम्म पूरा हुन्छ, त्यसै अनुपातमा त्यसलाई जीवन्त मान्न सकिन्छ । अन्यथा मात्र देव प्रतिमाहरूलाई बेग्लाबेग्लै स्थापना गर्दै रहनु र त्यहाँ पूजा पत्रीको चिन्ह पूजा हुँदै रहनाले त्यस उद्देश्यको पूर्ति हुन सक्दैन जसको लागि यस महान स्थापनाका लागि ऋषिहरूले आफ्नो दुरदर्शिता एवं प्रखर प्रयत्नशीलताको प्रयोग गर्नुभएको थियो ।

देवताहरूको पूजन तब उपयोगी हुन सक्छ जब त्यस अर्चनाको फलस्वरूप आदर्शवादी प्रेरणाहरूलाई उक्साउने समर्थ आधार पनि त्योसित नै जोडिएको हुन्छ । यदि यस्तो हुन सक्दैन भने घरमा राखिएको सानो प्रतिमा पूजा प्रयोजनका लागि पर्याप्त हुन्छ । तब यसका लागि यति धेरै धन र श्रमको विनियोग किन गर्ने ?

प्रेरणाहरूबाट रहित मात्र पूजा प्रयोजनसम्म सीमित देवालयहरूप्रति बुद्धिवादी वर्गका तीखा आक्षेप हुन्छन् । उनीहरू यसलाई स्थान, पूँजी एवं श्रमको अपव्यय मान्छन् तथा धर्म व्यवसायीहरूद्वारा, महालोभी पूँजीपतिहरूद्वारा रचिएका षडयन्त्र बताउँछन् । यी आक्षेपहरूको समाधानकारक उत्तर यसै रूपमा दिन सकिन्छ कि त्यसद्वांरा उच्चस्तरीय आस्थालाई निर्माण गर्न सक्ने रचनात्मक प्रवृत्तिहरूको संचालन हुँदै रहोस् । आजका तीर्थहरूलाई यसै कसौटीमा कस्नु पर्दछ कि उनीहरू आफ्नो मूल प्रयोजन–उत्कृष्टतापरक आस्था सम्बर्द्धनमा कहाँसम्म सहायक हुन्छन् । यदि यस्तो हुँदैन भने त्यसले आफ्नो उपयोगिता गुमाउँदै जानेछ र परम्परागत श्रद्धाको पूँजी समाप्त हुँदै उपहासको मात्र होइन, तिरस्कारको पनि भाजन बन्न पुग्नेछ ।

प्रेरणा केन्द्रहरूबाट मिल्दै रहन्छ । यसैले यसको निर्माता यी तीर्थहरूको अवतारहरूलाई भावना-शरीर मान्दथे र यसै श्रद्धाका साथ त्यसको सान्निध्यलाई शिरोधार्य गर्दथे ।

विभिन्न धर्म-सम्प्रदायहरूमा यही प्रथा प्रचलित छ कि तिनका संस्थापकहरूको शिक्षा प्रेरणाका लागि यस्ता केन्द्र बन्दै रहोस् जहाँबाट त्यस मिशनको सुसंचालन व्यवस्थित रूपले भविष्यमा पनि हुँदै रहोस् । इसाई धर्मका लागि क्रिश्चियन मिशनको तत्त्वावधानमा अनेकौं साना-ठूला धर्म संस्थान समस्त संसारमा काम गर्दछन् । धर्म प्रचारकहरूको निवासदेखि लिएर रचनात्मक प्रवृत्तिका सूत्र संचालन समीपवर्ती क्षेत्रमा यिनै केन्द्रहरूबाट हुन्छ । त्यसबेला सम्प्रदायहरूको दृष्टिबाट यस प्रकारका धर्म केन्द्रहरूलाई यसै भावनाले हेरिन्थ्यो जसबाट भारतवर्षमा तीर्थहरूको सम्मान हुन्थ्यो । सिखहरूको गुरुद्वार पूजा स्थल मात्र हुँदैनथे, त्यहाँ ती प्रवृत्तिहरू पनि चल्दथे जसको सहारामा सिख धर्मका प्रेरणाहरू त्यस स्थलमा पुग्नेहरूलाई प्राप्त हुन्थ्यो ।

तीर्थहरूको स्थापनामा कैयौं सन्तहरूको विशेष प्रयत्न रहेको छ । आद्य शंकराचार्यको प्रेरणाले भारतका चार कुनामा चार धामको स्थापना भयो । उहाँका शिष्य मान्धताले आफ्ना गुरुको ईच्छा योजना पूरा गर्नका लागि आफ्नो सर्वस्व दाउमा लगाएर त्यो महान प्रयोजन पूर्ण गरे । ब्रजधामका अधिकांश तीर्थ महाप्रभु चैतन्यको संकेतमा भगवान् श्रीकृष्णका भक्तहरूले बनाए र ती क्षेत्रमा विनिर्मित देवालयहरूको वर्तमान स्वरूप सामु आयो । पुष्टिमार्गीय सम्प्रदायका धर्मगुरु जहाँ जहाँ रहे, जहाँ धर्मोपदेश गर्दै रहे, प्राय: ती सबै प्रमुख स्थानहरूमा उहाँहरूका 'वैठकहरू'

(साभार: पं. श्रीराम शर्मा आचार्य वाङ्मय, तीर्थ सेवन क्यों ? और कैसे ?)

# श्रीपञ्चमी

माघ शुक्ल पञ्चमीलाई नेपालीहरूले वसन्तपञ्चमी अर्थात् श्रीपञ्चमीको रूपमा मनाउँदै आइरहेका छन् । ऋतुराज वसन्तलाई आह्वान गरी मनाइने वसन्त उत्सवमा, वसन्त राग गाउने, वसन्त श्रवण गर्ने गरिन्छ ।

वसन्तपञ्चमीको अवसरमा ऋतुराज वसन्त र कामदेवको अभिन्न मित्रता रहेको हुनाले यस दिन वसन्त एवं कामदेवका साथै कामदेवकी पत्नी रतिको समेत पूजा, आराधना गरिन्छ । समुद्र मन्थनको बेला वसन्तपञ्चमीकै दिन माता सागर-सुधा लक्ष्मीको प्रादुर्भाव भएको थियो । त्यसैले उक्त दिन माता लक्ष्मी र भगवान् नारायणको समेत पूजा, आराधना गर्ने गरिन्छ ।

योगेश्वर श्रीकृष्णले खुशी भएर माता सरस्वतीलाई वरदान दिनुभए अनुसार उक्त दिन माता सरस्वतीको पूजा, आराधना, ध्यान, साधना गरेर उहाँलाई खुशी पार्न सके वाणी सिद्ध हुने विश्वास गरिन्छ । विद्या र वाणीकी अधिष्ठात्री देवी सरस्वतीले चिन्मय वस्त्र धारण गर्नुभएको छ । उहाँ परम सुन्दरी, शुक्ल वर्णकी, सधैं मुस्कुराइरहने, परिपुष्ट विग्रहका साथ सर्वोत्तम रत्न आभूषणले सजिएकी देवी हुनुहुन्छ र सदा वीणा एवं पुस्तक धारण गरिरहनुहुन्छ ।

नेपाली समाजमा बालबच्चालाई विद्या सिकाउन कलम, कापी, सिलोट, खरी दिएर यही अवसरमा अक्षरारम्भ गराउने गरिन्छ । यस अवसरमा 'नमः वागीश्वराय' लेखाउने चलन पाइन्छ । माता सरस्वतीका प्रत्येक मन्दिर तथा घर-घरमा उहाँको पूजा, आराधना हुन्छ । स्कुल, क्याम्पस तथा गुरु आश्रममा विविध कार्यक्रमहरू पनि हुने गर्दछन् ।

ललितपुर जिल्लाको लेलेमा सरस्वतीकुण्ड र ज्ञानकुण्ड नामका दुई कुण्ड छन् जहाँ वसन्तपञ्चमीको दिन ठूलो मेला लाग्दछ । सम्वत् ५२६ को शिलालेखमा लेले र सरस्वतीकुण्डका बारेमा उल्लेख हुनुले लिच्छवीकालभन्दा अघिदेखि नै उक्त तीर्थस्थलले ख्याति पाइसकेको बुझिन्छ ।

इतिहासविद् हरेराम जोशीका अनुसार उक्त कुण्डमा नुहाउने र कुण्डको पानी तीनपटक पिउनाले बोल्न नजान्ने बच्चाले समेत

# वसन्तपञ्चमी र सरस्वती

माघ महिनाको पञ्चमी शारदाम्बाको आविर्भाव दिवस मानिन्छ । यस दिन सरस्वती पूजा विशेषरूपले गरिन्छ । सरस्वती जयन्तीदेखि नै वसन्त ऋतु प्रारम्भ भएको मानिन्छ । जीवनमा नित्य नवीन दिन आओस् र प्रतिदिन भगवती शारदाको आराधना होस्, यसका लागि निम्न नियमहरू बालक, गृहस्थ, व्यापारीलगायत प्रत्येकले पालना गर्नुपर्दछ ।

१. वेद, पुराण, रामायण, गीता इत्यादि सद्ग्रन्थ घरमा अवश्य हुनुपर्दछ । यी ग्रन्थहरूलाई देवीको स्वरूप मानेर पवित्र स्थानमा राख्नुपर्दछ ।
२. पठन र अध्ययनयोग्य कुनै पनि पुस्तक, काव्य इत्यादिलाई अपवित्र अवस्थामा स्पर्श गर्न हुँदैन र पृथ्वीमा उनीहरूलाई अनादर गरेर फ्याँक्नु हुँदैन ।
३. गृहस्थ र व्यापारीले घरको र व्यापारको हिसाब किताबको पुस्तक सहीरूपमा राख्नुपर्दछ र दैनिक आयव्ययको हिसाबकिताब राख्नुपर्दछ ।
४. कुनै पनि पुस्तकको अध्ययन गर्नु अगाडि आज्ञा चक्रमा छोएर अर्थात् मस्तिष्कमा छोएर कार्य तथा लेखन शुरु गर्नुपर्दछ ।
५. सरस्वतीको पूजा सेतो फूल, सेतो चन्दन, सेतो वस्त्र अलङ्कारहरूले सम्पन्न गर्नुपर्दछ ।
६. वाणी शुद्धिको लागि श्रेष्ठ मंत्रको उच्चारण नियमितरूपमा गर्नुपर्दछ । वाद-विवाद, अनावश्यक प्रलापबाट वाणी शक्तिलाई खर्च गर्नु हुँदैन ।
७. नित्य अध्ययन गर्ने रुची जागृत गर्नुपर्दछ र नयाँ-नयाँ ग्रन्थहरूको अध्ययन अवश्य गर्नुपर्दछ ।

जीवनको संरचना तपाईंको उत्पत्ति हो तर त्यस संरचनामा विशुद्ध भाव जागृत गर्नुपर्दछ र त्यसको साथै दुर्बल, क्षीण र दरिद्र मानसिकतालाई समाप्त गर्ने शक्ति व्यक्ति अर्थात् साधकभित्रै निहित हुन्छ । जब व्यक्ति साधक बन्दछ तब ऊ आफ्नो जडतालाई समाप्त गरी चैतन्यताको बाटोमा अग्रसर हुन्छ । सरस्वती सरसता प्रदान गर्नुहुने देवी हुनुहुन्छ । यो त्यस शक्ति तत्त्वसँग संयोजित छ जसबाट जीवनमा सौन्दर्य, राग, संगीतको उत्पत्ति हुन सकोस्, जीवनमा शुष्कता समाप्त हुन सकोस्, जीवनलाई चिन्ने प्रक्रिया प्रारम्भ होस् । केवल धन प्राप्त गर्नुलाई मात्र जीवन नसम्झिएर धनलाई आफ्नो अधीनमा राखेर जीवनलाई नयाँरूपबाट हेर्ने क्रिया केवल सरस्वतीको माध्यमबाट नै प्राप्त हुन सक्दछ । (साभार: मंत्र-तंत्र-यंत्र विज्ञान)

बोल्न थाल्ने, वाक्य शुद्ध हुने जनविश्वास रहीआएको छ ।

हाँडीगाउँमा रहेको सरस्वतीको मूर्ति नवौं शताब्दीको र ललितपुर टंगालको सरस्वतीको मूर्ति एघारौँ शताब्दीको मानिएको कुरा लैनसिंह वाङ्देलले आफ्नो कृतिमा उल्लेख गर्नुभएको छ ।

सरस्वतीलाई 'विद्यालक्ष्मी'को रूपमा पनि पूजा, आराधना गरिन्छ । कसैले ऋद्धि, सिद्धि र कसैले माया, कसैले आशा, कसैले आन्विसिकाको संज्ञा पनि उहाँलाई दिने गर्दछन् । वैष्णवहरू त माता सरस्वतीलाई वैष्णवीको रूपमा समेत मान्दछन् ।

नेपालमा बौद्ध धर्मावलम्बीहरू माता सरस्वतीलाई पुरुषको रूपमा मान्दछन् र बोधिसत्व श्री मन्जुश्रीको स्वरूपमा लिन्छन् । श्री मन्जुश्रीका सबैजसो मूर्ति र मन्दिरहरूमा माघ शुक्ल पञ्चमीका दिन पूजा, आराधना गरी विद्या, ज्ञानको चाहना राख्नेहरू थुप्रै देखिन्छन् ।

स्वयम्भूस्थित मन्जुश्रीको मन्दिरमा श्रीपञ्चमी (वसन्तपञ्चमी) का दिन ठूलो मेला लाग्ने गर्दछ । बाह्र महिनामा बाह्र देवीहरूको पूजा, आराधना गर्ने विधानअनुसार मंसिरमा 'श्री', पौष महिनामा ' लक्ष्मी', माघ महिनामा 'कमला', फागुनमा 'सम्पत' चैत्र महिनामा 'पद्मा', वैशाखमा 'नारायणी', जेठमा 'धृति', आषाढमा 'स्मृति', श्रावणमा 'पुष्टि', भाद्रमा 'तुष्टि', आश्विनमा 'सिद्धि', कार्तिकमा 'क्षमा'को पूजा गर्ने र व्रत

बस्ने गर्दछन् । यसबाट सौभाग्य, लक्ष्मी र विद्या प्राप्त हुने दृढ विश्वास राखिन्छ। श्रीपञ्चमीदेखि उक्त व्रत शुरु गरिन्छ। भक्तपुरमा उत्तर-दक्षिण भएर बग्ने हनुमन्ते खोलाको पूर्वी किनारामा सुण्या भन्ने प्रसिद्ध देवाली गर्ने स्थान छ । त्यहाँ एउटा सानो मन्दिर पनि रहेको छ । मन्दिरभित्र काठ, माटो आदिले बनेको मूर्ति छ जुन मूर्तिलाई नेवारी भाषामा 'ख्यले च्वम:म सयु द्य' अर्थात् चउरमा बस्ने सरस्वती देवी भनिन्छ । उहाँलाई ल्हासाबाट आएकी सरस्वती भनिन्छ । उक्त मूर्तिलाई महामञ्जुश्री वा नीलसरस्वती पनि भनिन्छ ।

श्रीपञ्चमीको अघिल्लो दिन उक्त ठाउँमा तेल घस्न जाने भनी तेलसहित विद्यार्थीवर्गको भीड लाग्ने गर्दछ । सरस्वती मन्दिरको पश्चिमपट्टि भित्तामा रहेको ढुङ्गामा भगवान् गणेशलाई वाहन बनाई बस्नुभएका आकाश भैरव (काल भैरव)को मूर्ति कोर्ने चलन छ । श्रीपञ्चमीको दिन आँखा उघारिने भैरव भएकोले चित्रकार वा शिक्षकको अगाडि नै भगवान् भैरवको आँखा चित्राङ्कन गरिने, लेखाउने चलन छ जसबाट दूरदृष्टि प्राप्त हुने, ज्ञानको वृद्धि हुने विश्वास गरिन्छ। सो मन्दिरको पूर्वपट्टि धूम्रवाराहीको मूर्ति र भीमसेन मन्दिर पनि छ । दक्षिणपट्टि मु: दिप (मसान) पर्दछ । तन्त्र-मन्त्र, जादु-टुना र विद्याका लागि पूजा गरिने माता सरस्वतीको मूर्तिलाई दश महाविद्यामध्येको दिव्य शक्ति तारा पनि भनिने र पूजा, आराधना समेत गरिने परम्परा रहेको छ। (स्रोत : रोलम्बा ८।४।१९९८)

जनश्रुतिका अनुसार बौद्ध तन्त्रयानका प्रवर्तक भनिएका मञ्जुश्रीकल्पका रचयिता महामञ्जुश्रीका शिष्य सर्वज्ञान मित्रले आफ्ना गुरुले आफूलाई भेट्न आउँदा मैलो र फाटेको लुगा लगाएको फोहोरी देखेर गुरुलाई देखेर पनि नदेखेजस्तो गरे । सत्सङ्ग, प्रवचन कार्यक्रम सकिएपछि गुरुछेउ पुगेर गुरु पाउमा ढोग्न खोज्दा शिष्यका दुवै आँखा गुरु पाउमा खसे। त्यसपछि दुवै आँखा भएको मञ्जुश्रीको गुरु पादुका र गुरु मण्डपको प्रचलन चलेको हो ।

काठमाडौँका पुराना घरहरूमा भगवान् श्रीगणेश, भैरव, कुमारजसरी नै श्रीगणेशका साथमा ढोकाको दायाँबायाँ गणेश, सरस्वती राख्ने चलन पनि छ ।

सरस्वतीलाई तान्त्रिक देवीको रूपमा, भूत-पिशाच भगाउने देवीको रूपमा पनि मानिन्छ । शाहकालीन एक घटनाक्रमअनुसार राजा रणबहादुर शाहकी कान्छी रानी कान्तिमतीको शीतला बिफर) रोग लागेर मृत्यु भएपछि वैद्य, तान्त्रिक, ज्योतिषीका अलावा मठ, मन्दिरले समेत राजाको कोपभाजन हुनुपरेको थियो । यिनै क्रममा गिद्धलाई अपशकुन पक्षी ठानेर मार्न लगाइयो, मृत गिद्धहरू जम्मा गरी ल.पु. जाउलाखेलमाथि लगेर जलाइयो । उक्त ठाउँमा बालक, वृद्धलाई लागू-लगान भई दु:ख दिन थालेपछि तत्कालीन तान्त्रिक आचार्यहरूले तान्त्रिक विधिअनुसार माता सरस्वतीको मूर्ति स्थापना गरे। त्यसपछि भूत, प्रेत, पिशाच लागू-लगान भएमा माता सरस्वतीको पूजा, आराधना गरेपछि निको हुने विश्वास गर्न थालियो । (स्रोत : त्रिरत्न सौन्दर्य गाथा)

माता सरस्वती अभयदेवी भएकीले काठमाडौँको नेवार समाजमा सरस्वती पूजा गर्न कपासको धागो कातेर गलामा लगाइदिने चलन छ। पूजा गरिसकेपछि माता सरस्वतीको पाउमा छोएर आफ्नो हृदयमा छुने चलन पाइन्छ, जसको अभिप्राय माता सरस्वती हृदयमा बास गरुन् भन्ने रहेको बुझिन्छ । सरस्वती माताको पूजा गरिसकेपछि माताको प्रसादस्वरूप उहाँलाई चढाएको अक्षतामध्येबाट नटुक्रिएको पाँच दाना अक्षता (चामल) दाँतले नछुने गरी निल्ने चलन छ। कुनै पनि विद्या होस् वा सीप, सङ्गीत, कला वा कार्यकुशलताको ज्ञान आरम्भ गर्न गुरु र शिष्य मिलेर माता सरस्वतीलाई आह्वान गर्ने वा मन्दिरमा पूजा गर्ने चलन पनि छ। माता सरस्वतीको व्रत बस्नेहरूले प्वालैप्वाल भएको घैंटो वा कलश शिरमा बोकी मन्दिरमा गई सरस्वती मातालाई सहस्रधारा जल चढाउने गर्दछन्। त्यसपछि मात्र लुगा लगाउने, अन्नजल ग्रहण गर्ने चलन छ। यसरी जाडो याममा नदीमा गई स्नान गरी वस्त्र नलगाई जलको कलश बोकी मन्दिरमा गएर देवीलाई स्नान गराउने कार्यलाई ठूलो पुरुषार्थका रूपमा लिइन्छ भने माता सरस्वतीबाट आफ्नो मनोकामना पूरा हुने दृढ विश्वास पनि भक्तहरूमा पाइन्छ ।

श्रीपञ्चमीको दिनलाई पवित्र र माङ्गलिक कार्यका लागि दिव्य दिनका रूपमा लिइन्छ । यो दिन विवाह, व्रतबन्ध, घर निर्माण, जग खन्ने, घर सर्ने आदि कार्य गर्न साइत हेर्न नपर्ने जनविश्वास पाइन्छ ।

*जय गुरुदेव !*

तीर्थयात्रीहरुबाट भजन प्रस्तुत हुँदै

तीर्थयात्राको क्रममा बसभित्र

लुनीको एक दृश्य

भोजनमा मस्त तीर्थयात्रीहरु

हेलो, जय गुरुदेव ! सुन्नुहोस् ।

तीर्थयात्रीहरु अघि बढ्नुहुँदै

.जयकार लगाउनु हुँदै

डुंगामा पनि नमस्कार

# एकादशी व्रत माहात्म्य

## माघ महिनाका एकादशी व्रतहरु

### क्षट्तिला एकादशी व्रतकथा
### (माघ कृष्णपक्ष)

युधिष्ठिर बिन्ती गर्नुहुन्छ– "हे भगवान् ! हे जगत्पते ! माघ कृष्णपक्षमा कुन एकादशी हुन्छ, कृपा गरी बताइदिनुहवस् ।" तब भगवान् श्रीकृष्ण आज्ञा गर्नुहुन्छ– "हे पार्थ ! माघ कृष्णपक्षमा सम्पूर्ण पापलाई नाश गरी पुण्य प्रदान गर्ने 'षट्तिला' एकादशी पर्दछ । यो पापहारिणी षट्तिला एकादशीको कथा अघि मुनिश्रेष्ठ पुलस्त्यले दाल्भ्यलाई बताएका थिए, जुन कथा यस प्रकार छ, ध्यानपूर्व सुन ।"

"हे नृपश्रेष्ठ, युधिष्ठिर ! उहिले मृत्युलोकमा एक ब्राह्मणी थिइन् । उनी सधैं देवीदेवताको पूजा अर्चनादि गर्नुका साथै मेरो भक्तिमा तल्लीन रही मेरो पूजा, उपासना गर्दथिन् । उनी सधैं गरिब, दीन, दुःखी तथा असहाय र ब्राह्मणहरूको सेवामा ध्यान दिई सेवारत रहन्थिन् । उनले कैयौं कठोर व्रत, तीर्थ गरिसकेकी थिइन् । उनको देहले दिव्यतम पवित्रता प्राप्त गरी परम सुन्दरता प्राप्त गरिसकेको थियो । तर उनले कुनै पनि तीर्थ व्रतमा भगवान् श्रीविष्णुको नामबाट दान पुण्य गरेकी थिइनन् । यही वास्तविकतालाई दृष्टिगत गरेर कपिल ब्राह्मणको भेषमा म मृत्युलोकमा गएँ । धर्मात्मा ती ब्राह्मणीको सामुन्ने भिक्षा पात्र थाप्दै भिक्षा मागेँ । तर ती ब्राह्मणी सधैं मेरो भक्तिमा लीन हुने भएकीले तिमी को हौ ? कहाँबाट आयौ ? तिम्रो नाम के हो ? भनी सारा वृत्तान्त बुझ्न चाहिन् । मैले आफ्नो परिचय नदिई बारम्बार भिक्षा माग गरेकोले आवेशमा आई उनले मेरो भिक्षापात्रमा माटोको डल्ला हाली भिक्षादान दिइन् । त्यसपछि म स्वर्गलोक फर्किएँ ।

धेरै समयपछि ती ब्राह्मणी जप, तप र व्रतको पुण्यका प्रभावले लावण्यवती सुन्दरी भई मानुषी नामले प्रख्यात् भई स्वर्गलोक आइन् । माटोको डल्ला दान दिएको कारणले उनलाई स्वर्गमा बस्ने निवास त मिल्यो तर त्यहाँ कुनै अन्न-पानी थिएन । उनी मेरा समीपमा आएर भन्न लागिन्- 'हे प्रभु ! मैले अनेकौं कठिन व्रत, तीर्थ, जप, तप गरेर जगत्का पालनहार भगवान् श्रीविष्णुको आराधना गरेकी थिएँ तर मेरो घरमा धन शून्य छ, खाने अन्न पनि छैन ।' तब मैले भनें कि तिमी जुन बाटो आएकी थियौ, त्यही बाटो आफ्नै घर जाऊ । तिमी र तिम्रो रूप हेर्न देवपत्नीहरू आउनेछन् । तिमीलाई मानुषी नामले पुकार्नेछन् । घरको ढोका बन्द गरेर बस्नू, ढोका नखोल्नू । तिमीलाई बोलाएपछि 'षट्तिला एकादशी व्रतको पुण्य फल दिने भए मात्रै भेट गर्छु, नत्र ढोका खोल्दिन' भनी ढोका नखोल्नू । तब तिमीले षट्तिला एकादशीको पुण्यफल प्राप्त गरी तिम्रो समस्या समाधान हुनेछ भनी फर्काइदिएँ ।

तदनुरूप केही क्षणमै देवपत्नीहरू मानुषीलाई भेट्न र हेर्न आए । उनले ढोका खोलिनन् । यदि मलाई भेट्ने हो भने मलाई 'षट्तिला' एकादशी व्रतको फलको पुण्य चाहिन्छ, अन्यथा म कसैसँग भेट गर्दिन । यसो भन्दा त्यहाँ कोही स्त्री थिएनन्, केवल एक स्त्रीको आवाज आयो- 'मानुषी ढोका खोल, षट्तिलाको पुण्य फल तिमीलाई दिएर म भेट गर्नेछु । त्यसबखत षट्तिला एकादशी (एक स्त्री) को रूपमा म स्वयं उपस्थित थिएँ ।

हे राजन् ! जब मानुषीले ढोका खोली, त्यसबखत उनी यस्ती लावण्यवती थिइन्, यक्ष, गन्धर्व, किन्नर आदि अप्सराहरूभन्दा पनि अद्वितीय, अवर्णनीय थिइन् । तत्पश्चात् षट्तिला एकादशीको प्रभावले मानुषीको घरमा सबै वैभवले सम्पन्नता छायो । मानुषी झन् झन् सौन्दर्यसम्पन्न अलौकिक बन्दै गइन् ।

हे नृपश्रेष्ठ युधिष्ठिर ! जसले माघ महिनामा षट्तिला एकादशीको विधिपूर्वक व्रत सम्पन्न गर्दछ, त्यसको सम्पूर्ण पूर्वजन्मको पाप नाश भई यस जन्ममा मरणोपरान्त विष्णुलोक वास हुन्छ । कथा सुन्नाले र पढ्नाले मात्र पनि परलोक सुधार्छ ।"

## 'जया एकादशी' व्रतकथा
## माघ शुक्लपक्ष

युधिष्ठिर बिन्ती गर्नुहुन्छ– "हे प्रभु ! हे करुणानिधान ! हजुरले मलाई माघ कृष्णपक्षको एकादशी र व्रतकथा बताउनुभयो, अब माघ शुक्लपक्षको एकादशीको बारेमा बताई मलाई कृतार्थ गर्नुहोस् ।"

भगवान् श्रीकृष्ण आज्ञा गर्नुहुन्छ– "हे राजन् ! हे नृपश्रेष्ठ युधिष्ठिर ! अघि स्वर्गलोकमा देवराज इन्द्र राज्य गर्दथे । पारिजात आदि फूलहरूको सुगन्धित र मनमोहक वातावरणमा नन्दन वनको सुगम्य र सौरभ स्थानमा देवगणहरू अप्सराहरूका साथमा अति आनन्दपूर्वक वनविहार गर्दै समय व्यतीत गर्दथे । यस्तैमा पचासौँ करोड यक्ष, गन्धर्व, किन्नर, अप्सराहरूको स्वेच्छिकताअनुसार देवराज इन्द्र मन बहलाउने हेतु वन विहारमा निस्कनुभयो । त्यहाँ गन्धर्वहरू गीत गाई बाजा बजाउने, अप्सराहरू नाच्नेजस्ता मुग्ध वातावरण छाइरहको थियो । त्यहाँ चित्रसेन र उनकी पत्नी मालिनी पनि सहभागी थिए । त्यस समारोहमा चित्रसेन तथा मालिनी पुत्री पुष्पवन्ती पनि साथै थिइन् । त्यसै समारोहमा गन्धर्वपुत्र माल्यवान पनि सहभागी थिए । समारोहको क्रम अघि बढ्दै गयो । माल्यवान पुष्पवन्तीको रूप, सौन्दर्यमा लट्ठिँदै गए । पुष्पवन्तीको रूप, सौन्दर्यमा मोहित भएर माल्यवान पुष्पवन्तीकै रूप र सौन्दर्यतर्फ मन्त्रमुग्ध भई लट्ठ भए । उता पुष्पवन्तीको पनि त्यही हालत थियो जसकारण समारोहमा भइरहेको गीतको लय र नृत्यको ताल भङ्ग भई कामातुर भावमा माल्यवान र पुष्पवन्ती भाव विभोर भइरहेको र समारोहको रौनकतामा आँच पुगेको देवराज इन्द्रलाई थाहा भयो । तब देवराज श्री इन्द्रले क्रुद्ध हुँदै 'हेर ! तिमीहरूले मेरो अपमान गऱ्यौ, तिमीहरू दुवै पिशाच योनिमा जानू' भनी श्राप दिनुभयो ।

देवराज श्री इन्द्रको श्रापपश्चात् माल्यवान र पुष्पवन्ती पति पत्नीकै रूपमा भए पनि पिशाच योनिमा रही घोर जङ्गल, कठिन पहाड, हिमाल आदि क्षेत्रमा असङ्ख्य दुःख, कष्ट झेल्दै जीवन व्यतीत गर्न लागे ।

यस प्रकार पिशाच योनिमा रही दुःख कष्टपूर्ण जीवनयापन गर्दा गर्दै एकदिन अचानक 'हामी कुन पाप कर्मले यस पिशाच योनिमा आई यो दुःख, कष्ट भोग्नु परिरहेको छ ? हाम्रो उद्धार कसरी होला ?' भनी एक-आपसमा कुरा गर्न लागे । अचानक दैव संयोगले माघ शुक्लपक्षको 'जया एकादशी' सामुन्ने आइरहेको थियो । त्यो जया एकादशीको दिन अन्जानमा तिनीहरू जलसम्म नखाई निराहार बस्न परिस्थितिले बाध्य बनायो । खान त के कुरा, उनीहरू रातभर निदाउन पनि सकेनन् । रातभर जागा रहे ।

जानी नजानी उनीहरूबाट जया एकादशीको व्रतको पालन हुन गयो (बाघ कराउनु र बाखा हराउनु भनेजस्तै) । जया एकादशीको प्रतापले दिव्य देह पुनः धारण गरी उनीहरू विविध अलङ्कारले सुशोभित भई स्वर्गलोक पुगे । आफूले श्राप दिएर पिशाच योनिमा पठाएका ती दम्पति पुनः स्वर्गलोकमा आएको देखी देवराज श्री इन्द्र स्तब्ध हुँदै भन्न थाल्नुभयो– 'तिमीहरूलाई मैले श्राप दिएर पिशाच योनिमा पठाएको थिएँ । तर तिमीहरू कुन देवताको बलबुताबाट फेरि यहाँ आयौ ?'

माल्यवान र पुष्पवन्ती भन्दछन्– 'हे प्रभु ! हामी जया एकादशीको व्रतको प्रभाव र भगवान् श्रीकृष्णको आशीर्वादले फेरि यस स्वर्गलोकमा आएका हौँ ।'

माल्यवान र पुष्पवन्तीको कथन सुनेपछि देवराज श्री इन्द्र भन्नुहुन्छ– "हे माल्यवान, पुष्पवन्ती ! जसले अबदेखि जया एकादशीको व्रत सम्पन्न गरी भगवान् श्रीकृष्णको भक्ति गर्दछ, त्यो व्यक्ति मेरो लागि पनि आदरणीय हुनेछ ।"

हे राजन् युधिष्ठिर ! यस प्रकार जसले जया एकादशीको व्रत सम्पन्न गर्दछ, त्यसको पूर्वजन्मका सम्पूर्ण ब्रह्महत्याजस्ता पापहरू पनि नाश भई पुण्य प्राप्त गर्दछ । यो जया एकादशीको कथा सुन्दा वा पढ्नाले मात्र पनि अग्निष्टोभ यज्ञको फल प्राप्त भई कालान्तरमा विष्णुलोक सुधार्छ ।

*जय गुरुदेव !*

*(प्रस्तुत राशिफल सूर्य सिद्धान्तमा आधारित छ । राशिफल लेखक अधिकारीज्यूको सगरमाथा टेलिभिजनमा हरेक दिन बिहान ६:०० देखि ७:०० बजेसम्म कार्यक्रम 'ग्रहफल' प्रत्यक्ष प्रशारण हुन्छ ।)*

**– ज्यो. हरिओम अधिकारी**
*'ज्योतिष भाष्कर'*

**मेष** (चू, चे, चो, ला, ली, लु, ले, लो, अ):
तपाईंको परिवारमा मांगलिक कार्य हुनेछन् । पारिवारीक समस्याको समाधान पनि निस्कने देखिन्छ । व्यापार-व्यवसायमा हानि हुन सक्ला । आर्थिक संकटले समस्या उब्जाउने देखिन्छ । तपाईंलाई जोडीबार शुभ, जोडी अंक शुभ, रातो र कलेजी रङ शुभ र दक्षिण पूर्वको यात्रा शुभ रहनेछ ।

**वृष** (ई, उ, ए, ओ, वा, वी, वु, वे, वो): चिसोसँग सम्बन्धित रोगले तपाईंलाई सताउनेछ । व्यापार-व्यवसाय फस्टाउनेछन् । जग्गा-जमिनको खरीद-बिक्री गर्न सक्नुहुनेछ । पशु चौपायाबाट धन लाभ हुनेछ । तपाईंको नोकरीका समस्या समाधान हुने देखिन्छ । जोडी अंक शुभ, जोडीबार शुभ, सेतो र खरानी शुभ रङ, दक्षिण पश्चिमको शुभ यात्रा रहनेछ ।

**मिथुन** (क, की, कु, ध, ङ, छ, के, को, ह):
अध्ययन अध्यापनमा जाँगर नचल्ने देखिन्छ । सन्तानको सुखबाट पनि टाढा रहनु पर्ने योग रहेको छ । वैदेशिक काम कारोवार फस्टाउनेछन् । व्यापारबाट सन्तोषजनक लाभ मिल्नेछ । पारिवारीक कलह रहने देखिन्छ । तपाईंका लागि बिजोडी अंक शुभ, बिजोडीबार शुभ, उत्तर पश्चिमको शुभ यात्रा, निलो र हरियो शुभ रङ रहनेछ ।

**कर्कट** (ही, हु, हे, हो, डा, डी, डु, डे, डो):
पेट विकारिक रोगले सताउने देखिन्छ । अरूको काममा समय व्यतीत हुनाले स्वयंका कार्य योजना अधुरै रहनेछन् । व्यापार-व्यवसायबाट राम्रो आम्दानी हुनेछ । सामाजिक कार्य गरे वापत मान-सम्मान पनि मिल्ने देखिन्छ । तपाईंका लागि जोडीबार शुभ, जोडी अंक शुभ, उत्तर दक्षिणको यात्रा र खरानी रङ शुभ रहनेछ ।

**सिंह** (मा, मि, मु, मे, मो, टा, टि, टु, टे):
तपाईंको पराक्रममा वृद्धि हुनेछ । साथीभाइको सहयोगले नयाँ कार्यको थालनी पनि गर्न सक्नु हुनेछ । पारिवारीक सुख एवं माङ्गलिक कार्य हुनेछन् । तपाईंले यो महिना आर्थिक संकटको सामना गर्नुपर्ला । स्वास्थ्यमा पनि समस्या रहनेछ, मन अशान्त हुने पनि देखिन्छ । तपाईंलाई बिजोडीबार शुभ, बिजोडी अंक शुभ, रातो र कलेजी शुभ रङ, पूर्वोत्तरको शुभ यात्रा रहनेछ ।

**कन्या** (टो, पा, पी, पू, ष, ण, ठ, पे, पो)
बोलीको प्रभाव बढ्नेछ । वाणी विकारले हानि हुनेछ । मानसिक चिन्ता बढ्नेछ । आफन्तको सहयोग रहनेछ । वस्त्रका व्यवसायीलाई फाइदा हुनेछ । यात्रा पनि रमाइलो रहनेछ । आर्थिक भार बढ्नेछ । तपाईंका लागि बिजोडी अंक शुभ, बिजोडीबार शुभ, उत्तर पश्चिमको शुभ यात्रा, रंगीन कलर शुभ रहनेछ ।

**तुला** (रा, रि, रु, रे, रो, ता, ति, तु, ते):
कुटुम्बसँगको आर्थिक लेनदेनले विवाद बढाउनेछ । नयाँ कार्यको खोजी हेतु व्यर्थको समय जानेछ । रोकिएका र बिग्रिएका कार्य बन्न थाल्नेछन् । निमोनिया हुन सक्ला । जोडी अंक शुभ, जोडीबार शुभ, दक्षिण पश्चिमको शुभ यात्रा, खरानी र घुम्ने रङ शुभ रहनेछ ।

**वृश्चिक** (तो, ना, नि, नु, ने, नो, या, यि, यु):
खर्चको अधिकताले मन चिन्तित रहनेछ । भूमि र घर वाहन प्राप्त हुन सक्ला । सन्तानको पनि प्राप्तिको योग रहेको छ । नोकरीमा प्रमोशन मिल्नेछ । सामाजिक मान, पद पनि प्राप्त हुने देखिन्छ । तपाईंलाई जोडीबार शुभ, जोडी अंक शुभ, रातो र निलो रङ शुभ, दक्षिण पूर्वको शुभ यात्रा रहनेछ ।

**धनु** (ये, यो, भा, भी, भु, ध, फ, ढा, भे):
तपाईंका अधुरा रहेका कार्य पूरा हुने देखिन्छ । वैदेशिक क्षेत्रबाट सहयोग प्राप्त हुनेछ । वैदेशिक व्यापार फस्टाउनेछन् । पारिवारीक समस्याले सताउने देखिन्छ । आर्थिक लाभ प्रशस्तै मिल्नेछ । रमाइलो भ्रमण पनि हुन सक्ला । बिजोडीबार, बिजोडी अंक, रातो, पहेँलो रङ, उत्तर पश्चिमको यात्रा शुभ रहनेछ ।

**मकर** (भो, जा, जी, जु, जे, जो, ख, खि, खु, खे, गा, गि):
तपाईंलाई डर र चिन्ताले निद्रा लाग्ने छैन । आँखाको समस्या रहन सक्ला । व्यापार, कृषि र नोकरीमा सफलता मिल्नेछ । वैदेशिक कार्य अधुरै रहनेछन् । तपाईंका लागि बिजोडीबार शुभ, बिजोडीबार अंक, कालो, निलो शुभ रङ , पश्चिमोत्तरको शुभ यात्रा रहनेछ ।

**कुम्भ** (गु, गे, गो, सा, सी, सू, से, सो, दा):
इर्ष्या गर्नाले हानि हुनेछ । परिवारमा माङ्गलिक कार्य हुनेछन् । वस्त्रलाभ, गर-गहना प्राप्ति हुनेछ । स्वास्थ्यमा समस्या रहन सक्ला, नियमित कार्य योजनामा बाधा पर्ने देखिन्छ । भेटघाटमा रमाइनेछ । बिजोडीबार, बिजोडी अंक, पूर्वोत्तरको यात्रा र रातो र पिंक रङ शुभ रहनेछ ।

**मीन** (दी, दु, थ, झ, ञ, दे, दो, च, ची):
तपाईंलाई वाक सिद्धि मिल्नेछ । बोलीको प्रभावले बिग्रिएका कार्य बन्दै जानेछन् । ठूला व्यक्तिसँगैको सम्पर्क बढ्नेछ । नयाँ कार्यको थालनी पनि गर्न सक्नु हुनेछ । स्वास्थ्यमा पनि सुधार हुने देखिन्छ । तपाईंलाई बिजोडी अंक शुभ, बिजोडीबार शुभ, उत्तर पश्चिमको शुभ यात्रा, पहेँलो, रातो शुभ रङ रहनेछ ।
*अस्तु । शुभम् ।*

# गोरखवाणी

**पासि बैठि सोभै नहीं ।**
**साथि रमाई भुंडि ॥**
**गोरष कहै असतरी कहा ।**
**सलह कह मुण्डि ॥**

योग साधनामा अगाडि बढ्ने प्रत्येक
सम्पर्कमा रहनु सर्वथा निषिद्ध गरिएको
खालि विषयभोग, काम आसक्ति बढ्
परमात्मा साक्षात्कार गर्नमा अस
लागेको भए पनि प्रत्येक अ
त्यागी योग साधनामा ला

**जरणा जोगी जु**
**जीवै झरणा म**
**षोजै तन मिल**
**अगह अमर**

योगीहरूको
वीर्यलाई स्थिर
परिणत गर्दछन्
वीर्यको रक्षा गर्दै
व्यक्ति योगी हुन
प्राप्तिको लागि
योग सिद्धिको

**जप तप**
**बाले कंद्र**
**येहा जोगी**
**दूजा पेट भ**

यस संसारमा
आफ्ना इन्द्रियहरूलाई
जुन साधकको आचरण
मात्रकै योगी हुन् । उ
धारण गरेका हुन्छन् ।
ब्रह्मचर्यव्रती हुन्छन् र पर

**जोगेसर की इहै परछ्य**
**सबद बिचार्‍या षेलै ॥**
**जितना लाइक बासणा होवैं ।**
**तेतौ तामैं मेल्है ॥**

शब्द नै ब्रह्म हो, शब्द नै सद्गुरुदेवको
योग सिद्ध योगेश्वरको परिचय शब्दबाटै थाहा प

ने प्रत्येक साधकले एवं विशेष गरी हठयोग साधनामा अगाडि बढ्ने साधकले स्त्री
गरिएको छ । कारण स्त्रीसँगको सम्बन्धले साधकको मन चंचल हुन थाल्दछ ।
क्ति बढ्दछ । यस्तो स्थितिमा साधकले नाद-विन्दुको साधना गरी यसैको माध्यमबाट
र्नमा असमर्थ हुन्छन् । स्त्रीहरू जति सीधासाधा भए पनि अथवा साधनाको क्षेत्रमा
त्येक अवस्थामा स्त्रीसँगको सम्पर्क हानिकारक छ । त्यसैले उनीहरूको संगत
ामा लाग्नु नै योग साधकको लागि सर्वथा श्रेयस्कर छ ।

**ोगी जुगि जुगि ।**
**रणा मरि मरि जाय ॥**
**तन मिलै अविनासी ।**
**ह अमर पद पाय ॥**

ीहरूको लागि ब्रह्मचर्यको पालन आवश्यक छ । जो योगीहरू आफ्नो शरीरमा
स्थिर राखी प्राणायाम साधनाद्वारा ऊर्ध्वमुखी गर्दछन् र वीर्यलाई ओज तपमा
गर्दछन् अर्थात् शरीरमा नै पचाउँछन्, उनीहरू नै सिद्ध योगी हुन्छन् । जो साधकले
रक्षा गर्दैन र कामेन्द्रियजन्य विषयसुखको प्राप्तिमा वीर्यलाई नाश गर्दछ, त्यस्तो
ोगी हुन सक्दैन । सच्चा योगी शरीरमा नाद-विन्दुको साधना गर्दछन् र परमात्मा
ो लागि शरीरलाई माध्यम बनाउँछन् । उनीहरू दुर्लभ कैवल्य पदमा प्रतिष्ठित भई
द्धिको रसास्वादन गर्दछन् ।

**प तप जोगी संजम सार ।**
**ाले कंद्रय कीया छार ॥**
**ा जोगी जग मै जोय ।**
**पेट भरै सब कोय ॥**

संसारमा वास्तविक योगी तिनीहरू नै हुन् जसले जप, तप एवं संयमको माध्यमबाट
यहरूलाई प्रत्याहारित गरी विषयोन्मुखी हुनबाट बचाउँछन् र कामलाई जलाउँदछन्।
आचरण जप, तप एवं संयमको विपरीत हुन्छ, विमुख हुन्छ, त्यस्ता साधक नाम
हुन् । उनीहरूले केवल भिक्षा मागेर जीविका यापन गर्नका लागि योगीको भेष
न्छन् । वास्तविक योगी त जप, तपमा लाग्ने संन्यासी एवं संयमी हुन्छन्, अखण्ड
न् र परम शिवमा लिन हुने ध्येयमा लिप्त रहन्छन् ।

**परछ्या ।**
**॥**
**होवैं ।**

द्गुरुदेवको उपदेश हो, आज्ञा हो र यही नै नाद ब्रह्मको उपासनाको प्रतीक हो ।
थाहा पाउन सकिन्छ । उनीहरू विवेकपूर्ण रूपमा शब्दलाई विचार गरी अनुभव

सिद्ध गरी शिष्यलाई योग साधनामा अगाडि बढाउँछन् र उनीहरूको जीवन योग साधनाबाट धन्य बनाइदिन्छन्, श्रेयस्कर बनाइदिन्छन् । योगश्वर तिनीहरू हुन्छन् जसले शिष्यको योग्यता, क्षमता, पात्रता जाँच गरी साधना पथमा अग्रसर गराउँछन् र त्यति मात्रै क्षमता दिँदै जान्छन् जति शिष्यले धारण गर्न सक्दछ । गुरूप्रदत्त निर्देशन, आज्ञा, उपदेश केवल शिष्यको क्षमताअनुसार मात्रै हुने गर्दछन् । त्यस्ता योगेश्वर नै वास्तवमा सद्गुरु हुन्छन् ।

## प्रेसको मसीले चित्र लिनु

पुस्तक छाप्ने प्रेसमा रहेको मेशिनमा ठूलो रोलरमा लागेको मसी छपाईको काम सिद्धिएपछि त्यसमा लागेको मसी गाढा नभई अलि पातलो हुन जान्छ, यस पातलो मसीलाई प्रयोग गर्नुपर्दछ ।

सबैभन्दा पहिले एउटा मेचमा सेतो कागजलाई बिछाऔँ र कागत र मेचको बीचमा कागजको तलतिर पारेर सानो रुमाल राखौँ । अब आफ्नो दाहिने हात रोलरमा लगाएर आफ्नो सम्पूर्ण हातमा मसी लागेको छ कि छैन हेर्नुहोस् । सबै हातमा मसी लागेको छ भने हातलाई सावधानीका साथ त्यस कागजमा राखेर दबाउनुहोस् । यसमा पनि यस कुराको सावधानी राख्नुपर्दछ कि आफ्नो हातको मध्यभाग त्यस रुमालमा रहोस् जसबाट आफ्नो सम्पूर्ण हातको चित्र स्पष्ट रूपमा आउन सकियोस् ।

जब हात राखिन्छ हातका जोर्नीहरूमा दोस्रो हातले हल्का रूपमा दवाब दिऔँ, यसबाट कुनै पनि स्थान खाली रहन पाउँदैन । यसपछि हातलाई नहल्लाइकन माथि उठाऔँ । यसरी आफ्नो हातको चित्र कागजमा स्पष्ट रूपमा आएको देखिनेछ ।

यसरी नै बायाँ हातको चित्र पनि कागजमा उतारौँ र कागजलाई दुई मिनेटसम्म हावामा सुक्न देऔँ । सुकेपछि त्यसमा नाम, ठेगाना र जन्म तारिख लेखेर हस्तरेखा विशेषज्ञ कहाँ भविष्यफल थाहा पाउनका लागि पठाउन सकिन्छ ।

मेरो विचारमा प्रत्येक व्यक्तिको तीन वटा जति हस्तरेखा चित्र पठाउनु आवश्यक हुन्छ किनकि कुनै चित्रमा कुनै कमी रहेको पाइएमा अन्य चित्रलाई हेरेर त्यसको बारेमा थाहा पाउन सकिन्छ ।

## मसीको प्याडले हस्तचित्र उतार्नु :

छाप लगाउनका लागि सबैको घरमा मसीको प्याड सजिलैसित पाउन सकिन्छ । यस प्याडको माध्यमबाट पनि हस्तचित्र राम्रोसित उतार्न सकिन्छ । मसीको प्याडबाट हस्तचित्र उतार्ने विधि पनि माथिको प्रेसको मसीले हस्तचित्र उतार्ने जस्तै हो ।

## फोटोबाट चित्र लिनु

यो विधि धेरै सही र प्रामाणिक मान्न सकिन्छ । यसका लागि कुशल फोटोग्राफरको आवश्यकता पर्दछ । ध्यान रहोस् कि लाइटको व्यवस्था यति धेरै तेजिलो नहोस् कि सानो वा हल्का रेखा त्यस तेजमा नै नहराओस्, न त लाइटको व्यवस्था यति हल्का नै होस् जसबाट सूक्ष्म रेखाहरू स्पष्ट नै हुन नपाओस् । फोटो खिचाउनुभन्दा पहिले यो कुरा फोटोग्राफरलाई राम्रोसित भनिदिनु पर्दछ । साथै सम्पूर्ण हात तथा मणिबन्धसम्मको फोटो आउनु पर्दछ र फोटोमा हातका औँलाहरू थोरै खुलेको हुनुपर्दछ अर्थात् एक अर्कासित टाँसिएको हुनुहुँदैन ।

फोटोको कागज उत्तम कोटिको हुनु पर्दछ तथा दुवै हातका चित्र बेग्लाबेग्लै लिन सकिन्छ । मेरो विचारमा पोष्टकार्ड साइजभन्दा सानो चित्र उपयुक्त हुन्छ ।

माथि उल्लेख भएका चारै पद्धतिमध्ये कुनै पनि पद्धति अपनाएर आफ्नो हातको रेखाहरूको चित्र भविष्यवक्तालाई पठाएर आफ्नो भविष्यफल सही सही रूपमा ज्ञात गर्न सकिन्छ ।

## माघ महिनामा पर्ने चाडपर्वहरू

| | |
|---|---|
| माघ १ गते | **श्री शिवगोरक्ष हवन,** मकर सङ्क्रान्ति, |
| माघ २ गते | **तान्त्रोक्त वटुक भैरव हवन, तान्त्रोक्त गणपति हवन, तान्त्रोक्त चण्डेश्वरी हवन,** |
| माघ ३ गते | **तान्त्रोक्त महालक्ष्मी हवन तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| माघ ४ गते | **तान्त्रोक्त बगलामुखी हवन, तान्त्रोक्त वेदव्यास हवन,** |
| माघ ६ गते | **तान्त्रोक्त बाघभैरव हवन,** गोरखकाली पूजा |
| माघ ८ गते | **दिव्य गुरु महोत्सव** |
| माघ ९ गते | पुत्रदा एकादशी |
| माघ १३ गते | श्रीस्वस्थानी व्रतारम्भ |
| माघ १४ गते | **गोरक्ष प्रकट तिथि** |
| माघ १७ गते | **मंगल चौथी** |
| माघ २१ गते | गोरखकाली पूजा |
| माघ २४ गते | षट्तिला एकादशी |
| माघ २९ गते | सोनम ल्होसार |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

# सिद्धाश्रम शक्ति केन्द्रका सम्पर्क कार्यालयहरू

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही,** बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, बिन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानो बानेश्वर,
  फोन: ०१-४४६४५४७
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनिभैरव)
  फोन: ०१-६९१२८२७
- **ललितपुर**, गोदावरी

# खुशीको खबर

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा एवं आशीर्वादस्वरूप विगत २ महिनादेखि गोरक्ष निखिल आयुर्वेद केन्द्रले पञ्चकर्म चिकित्सा शुरु गर्नुका साथै अभ्यङ्ग (Whole Body Massage), गुदा दुखेकोमा वस्ति, कब्जियत, ग्याष्ट्रिकबाट पीडितहरूका लागि वीसत, वातव्याधि एवं मोटोपनाका लागि स्वेदन (Sudation), Steam Therapy का साथै उल्टी, विरेचन आदि पञ्चकर्म उपचारको पनि सेवा दिइरहेको छ । तपाईंहरू पनि समयमा नै आफ्नो समस्याको बारेमा जानकारी लिएर कुन उपचार पद्धति आफ्नो लागि ठीक हुन्छ भन्ने पहिचान गरी स्वास्थ्यलाभ गर्न सक्नुहुनेछ ।

**हाल उपलब्ध पञ्चकर्म सेवाहरू–**

स्नेहन, स्वेदन, शिरोधारा, नस्य, जानु वस्ती, कटि वस्ती, मात्र वस्ती, वमन, विरेचन, वस्ती, (आस्थापात, अनुवाशन), शङ्ख प्रक्षालन, अक्षी तर्पण, पिचु, योनि प्रक्षालन, Steam Bath ।

## मोटोपनाको ग्यारेण्टी (Guarantee) का साथ उपचार

शरीरको अनावश्यक मोटोपना घटाउन चाहनुहुन्छ भने तुरुन्तै गोरक्ष निखिल आयुर्वेद केन्द्रमा सम्पर्क गर्नु होला । फेरि ढिलो होला है !

अत्यन्त प्रभावकारी, छोटो समय मात्र लाग्ने एवं स्वास्थ्यप्रदायक नस्य कर्म गरेर लाभ उठाउनुको साथै आफ्ना आफन्तहरूलाई पनि यस बारेमा जानकारी दिएर सबैको स्वास्थ्यको उत्थान गर्ने प्रयासमा अब तपाईं हामी किन पछि पर्ने ?

**औषधी पसल खुल्ने समयः बिहान ७:३० देखि बेलुकी ७ बजेसम्म । डाक्टर उपलब्ध हुने समयः बिहान ७:३०–१०:३०, बेलुकी २:००–७:०० बजे ।**

# हार्दिक अनुरोध

तपाईंको घरवरिपरि वा छरछिमेकमा भएका औषधीय गुणयुक्त बोट-विरुवाका साथै यसको खेती गर्न सकिने सम्भावना देखिन्छ भने यस गोरक्ष निखिल आयुर्वेद केन्द्रमा सम्पर्क गर्नुहुन हार्दिक अनुरोध गर्दछौं ।

**सम्पर्कका लागि :**

**गोरक्ष निखिल आयुर्वेद केन्द्र**

**मोबाइलः ९८४९१२११६०, ९८४९०२५३२३**

गुरुधाम, जोधपुरलगायत भारतका विभिन्न तीर्थस्थलहरुको यात्रा गर्ने क्रममा काशी वाराणसीमा खिचिएको तीर्थयात्रीहरुको तस्विर

# आयुर्वेद भनेको य

## वमन

**पंचकर्मको प्रमुख कर्म :**

हामीले अघिल्ला अङ्कमा पंचकर्मको पूर्वकर्म अर्थात् पंचकर्म गर्नुभन्दा पहिले गर्नुपर्ने स्नेहन (मालिस) स्वेदन (Sudation) को बारेमा जानकारी हासिल गऱ्यौं । अब हामी यस अंकमा प्रमुख कर्म जस्तै (Operative) वमन (Emesis) को बारेमा चर्चा गर्न जादैछौं ।

वास्तवमा नै भन्ने हो भने प्रमुख कर्महरुमध्ये वमन कर्म अलि कठिन मानिन्छ र धेरै होशियारी अपनाउनु पर्ने हुन्छ। खुशीको खबर यो छ कि परमपूज्य सद्‌गुरुदेवहरुको कृपा एवं आशीर्वादस्वरूप गोरक्ष निखिल आयुर्वेद केन्द्रमा सफलताका साथ विभिन्न रोगहरुमा आवश्यकताअनुसार वमन कर्म पनि सफलताका साथ गरिँदैछ। स्मरण रहोस्, पंचकर्ममा गरिने वमन, विरेचन आदि कर्म जो कोहीले पनि सामान्य तथा शरीरशोधन (Purification) को लागि पनि गर्न सक्छन् । यति मात्र हो कि व्यक्तिको शरीर सो कर्म गर्नको लागि योग्य हुनु पर्दछ ।

"तत्र-दोष-हरणम् उर्ध्वभागं वमनसञ्ज्ञकम्" (च.क १/४)

अर्थात् जुन प्रक्रियाद्वारा दोषहरु शरीरको ऊर्ध्व भाग अर्थात् मुखबाट बाहिर निस्किन्छ, त्यसलाई वमन भनिन्छ ।

शरीर दोषलाई बाहिर निकाल्नको लागि वात दोषमा वस्ती, पित्त दोषमा विरेचन तथा कफ दोषमा वमन सर्वश्रेष्ठ उपाय मानिन्छ । कफको स्थान ऊर्ध्वभागमा हुन्छ र आमाशय यसको प्रमुख स्थान मानिन्छ। नजिकको मार्गबाट दोष निक्लनुपर्ने सिद्धान्तअनुसार मुखबाट अर्थात् नजिकको भागबाट दोषहरुको निर्हरण हुन्छ । वमन विरेचनमा धुम नस्य आदिमा भन्दा बढी मात्रामा दोषहरुको निर्हरण हुने हुनाले पनि पंचकर्ममा यसलाई प्रमुखता दिइएको हो । वमन केवल रोगहरुमा दोष निर्हरणार्थ मात्र प्रयोग नगरेर स्वास्थ्य रक्षणार्थ वसन्त ऋतुमा पनि गरिन्छ । वमन प्रक्रियामा विभिन्न औषध द्रव्य, कल्क र क्वाथको प्रयोग गरिन्छ । यी द्रव्यलाई वामक द्रव्य भनिन्छ जसले आ-आफ्ना विभिन्न गुणको कारण विशिष्ट कार्य गर्छन् ।

वामक द्रव्यका निम्नलिखित गुणहरु हुन्छन्–

१) **उष्ण गुण** : यो गुणको कारण वामक द्रव्यले विष्यंदन गर्छ अर्थात् दोषलाई पकाएर गलाउने काम गर्छ र कोष्ठमा लैजान मद्दत गर्छ ।

२) **तीक्ष्ण** : तीक्ष्ण गुणले दाह, पाक तथा स्राव गर्छ। तीक्ष्ण गुणले वामक द्रव्यमा

# यति मात्रै हो त ?

शीघ्रताको साथ कार्य गर्ने क्षमता दिन्छ ।

३) **सूक्ष्म गुण** : सूक्ष्म गुणको कारण वामक द्रव्य स्थूल तथा अणु स्रोतहरुमा प्रवेश गर्छ । वामक द्रव्यले अणुप्रवण भावको कारण दोषलाई कोष्ठमा ल्याउँछ ।

४) **व्यवायी** : जुन द्रव्यले जठराग्निको पाक हुनु पूर्व नै आफ्नो प्रभावको कारण पूरै शरीरमा व्याप्त भएर गुणकर्म देखाउँछ, त्यसलाई नै व्यवायी भनिन्छ । वामक द्रव्य व्यवायी गुणका कारण तिनीहरुको पाक हुनुभन्दा पहिले सबै शरीरमा व्याप्त भएर उष्ण, तीक्ष्ण, आदि गुणले कार्य शुरु गर्न मद्दत गर्छ ।

५) **विकासी गुण** : विकाशी गुणको कारण वामक द्रव्य धातुहरुमा टाँसिएर रहेका दोषहरुलाई पृथक गर्नमा सक्षम हुन्छ ।

६) **ऊर्ध्वभाग प्रभाव** : वामक औषधीको सबैभन्दा महत्त्वपूर्ण गुण यही हो । वामक द्रव्य अग्नि तथा वायु महाभूत प्रमुख हुनाले यिनीहरुको ऊर्ध्वभाग प्रवृत्ति हुन्छ र माथि अर्थात् आमाशयभन्दा ऊर्ध्वभाग मुखबाट निस्किन्छ ।

७) **वामक द्रव्य** : चरक, सुश्रुत, वाग्भट आदि आचार्यहरुले विभिन्न वामक द्रव्यहरुको उल्लेख गरेका छन् जसमध्ये केही प्रमुख द्रव्य निम्न छन्–

मदनफल, कुटज, धर्मागद (तितेघिरौला), यष्टिमधु, इक्ष्वाकु, धामार्गत, वचा, सर्षप, निम्व, विडंग, इन्द्रायणी, त्रपुष, पिप्पली, चक्रमर्द, चित्रक, करंज, अश्वगन्धा, देवदाली, लवण, कोविदार ।

माथि उल्लिखित वामक द्रव्यहरुमध्ये विशेष रुपमा वमन कल्क बनाउने, वमन क्वाथ बनाउन यष्टिमधु, सर्स्युं, त्रिकुट, मह, सिधेनुन आदिको प्रयोग गरिन्छ ।

कल्क बनाउने, क्वाथ बनाउन भन्दा पहिले वमन गर्ने व्यक्ति वमन गर्न योग्य छन् कि छैनन् भनेर विचार गनुपर्ने हुन्छ ।

**वमन योग्य व्यक्ति र रोगहरु :**

अम्लपित्त, कास, स्तन्यदोष, अपस्मार, श्वास, प्रमेह (Diabetes), उन्माद, अर्बुद (Tumer), नाक, कान, घाँटीसम्बन्धी विकार, पूतिनशा, कुष्ठ (Skin Disease), ग्रन्थी, विस, गरविस (Toxicoses), अतिसार, कफज रोग, मुखपाक, अजीर्ण ।

**वमन अयोग्य व्यक्ति र रोगहरु :**

बच्चाहरु, गर्भवती, हृदयरोगी, ऊर्ध्वरक्तपित, मोटोपन, वृद्ध, गुल्म (Epitaxis, Haemotosis), उदररोगी (Ascities), तिमीर, शिरशुल, कोष्ठबद्ध (Constipation) ।

यसरी व्यक्तिको योग्यायोग्य विचार गरेर मात्र वमन प्रक्रिया गराउनु पर्ने हुन्छ । यसरी विचार गरी गरेको वमन क्रिया प्रभावकारी एवं स्वास्थ्यवर्द्धक हुन्छ ।

*जय गुरुदेव !*

# सिद्धाश्रम भवन तथा सिद्ध रतननाथ मन्दिरको शिलान्यास

परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज तथा सिद्ध रतननाथ बाबाको कृपा, अनुकम्पास्वरूप सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र, मनवाबजार, पर्साले जनचाहनाअनुरूप सिद्धाश्रम भवन, सिद्ध रतननाथ मन्दिर, धर्मशाला एवं योग प्रशिक्षण केन्द्र निर्माण योजना अघि बढाएको छ ।

स्थानीय बुद्धिजीवी, जनसमुदाय र आश्रमका कार्यकर्ता साधकसाधिकाहरूको उपस्थितिमा सिद्धाश्रम भवन एवं सिद्ध रतननाथ मन्दिर निर्माण समितिका अध्यक्ष श्री लालबाबु पटवारीबाट शिलान्यास सुसम्पन्न भएको थियो ।

(आरती संचालन केन्द्र शिलान्यास कार्यक्रमका झलकहरू)

नेपालको इतिहासमै पहिलो गोरक्ष निखिल मन्दिर निर्माण भइरहेको छ । निर्माणधीन यस मन्दिरका लागि हालै सहयोग रकम पनि संग्रह हुँदैछ । माझथाना-२ भगवतीटार, कास्कीमा निर्माण भइरहेको यस दिव्य मन्दिर निर्माणपछि परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको मन्दिरको श्रीगणेश नेपालमा हुने

गुरुधाम, जोधपुरलगायत भारतका विभिन्न तीर्थस्थलहरुको यात्रा गर्नुहुने पोखराको समूह

# शुभकार्यको शुभारम्भ शुभमुहूर्तमा

वराहमिहिरले शताब्दियौँपूर्व कालगणना गरेर यो सिद्ध गरेका थिए कि प्रत्येक दिन मानिसको शुभ र अशुभ दुवै प्रकारका समय आउँछन् र कालज्ञानअनुसार शुभ समयमा कार्य गरेमा निश्चय नै कार्यमा सफलता प्राप्त हुन्छ ।यद्यपि ज्योतिषमा दिशासूल, योगिनी, चन्द्रमा आदिको उल्लेख छ र यो पनि बताइएको छ कि यी सबैलाई ध्यानमा राखेर नै शुभकार्य प्रारम्भ गर्नु पर्दछ ।महिराचार्यका अनुसार यदि हामीलाई कालज्ञान छ भने यी कुराहरूलाई ध्यानमा राख्नु आवश्यक छैन किनकि कालज्ञान आफैँमा अत्यन्त महत्त्वपूर्ण छ ।यसैले यसमा व्यतिपात, दिशासूल आदिको अशुभ प्रभाव पर्दैन ।यात्रा, विवाह, भेटघाटलगायतका कुनै पनि शुभकार्य प्रारम्भ गर्दा कालज्ञानअनुसार गरिएमा ती कार्यहरू सफल हुन्छन् भनेर मिहिराचार्य भन्दछन् ।

प्रस्तुत शुभ समयहरू (सर्वश्रेष्ठ तथा श्रेष्ठ) परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूद्वारा रचित 'ज्योतिष और काल निर्णयु नामक हिन्दी ग्रन्थमा आधारित रहेर तयार पारिएको हो ।

**२०६८ माघ ७, १४, २१ र २८ गते आइतबार**

सर्वश्रेष्ठ– दिन ६:००–६:४८, रात्रि ६:४८–७:३६, ३:३६–४:२४

श्रेष्ठ– दिन ६:४८–१०:००, रात्रि ८:२४–१०:००, ४:२४–६:००

**२०६८ माघ १, ८, १५, २२ र २९ गते सोमबार**

सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२

श्रेष्ठ– दिन ६:००–७:२४, १०:४८–१:१२,३:३६–५:१२

रात्रि ९:१२–१०:००, १:१२–२:४८

**२०६८ माघ २, ९, १६ र २३ गते मंगलबार**

सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२, ३:३६–४:२४

श्रेष्ठ– दिन ६:००–८:२४, १०:००–१२:२४, ४:३६–५:१२

रात्रि ९:१२–१०:००, १२:२४–२:००, ४:२४–६:००

**२०६८ माघ ३, १०, १७ र २४ गते बुधबार**

सर्वश्रेष्ठ– दिन ३:३६–४:२४, रात्रि ९:१२–१०:४८

श्रेष्ठ– दिन ७:३६–९:१२, ११:३६–११:५४, ४:२४–६:००

रात्रि ६:४८–९:१२, २:००–६:००

**२०६८ माघ ४, ११, १८ र २५ गते बिहीबार**

सर्वश्रेष्ठ– रात्रि ७:३६–९:१२

श्रेष्ठ– दिन ६:००–८:२४, १०:४८–१:१२, ४:२४–६:००

रात्रि ९:१२–१०:००, १:१२–२:४८, ४:२४–६:००

**२०६८ माघ ५, १२, १९ र २६ गते शुक्रबार**

सर्वश्रेष्ठ– रात्रि १:१२–३:३६

श्रेष्ठ– दिन ६:४८–१०:२४, ४:२४–५:१२

रात्रि ८:२४–१०:४८, ४:२४–६:००

**२०६८ माघ ६, १३, २० र २७ गते शनिबार**

श्रेष्ठ– दिन १०:३६–१२:२४, ३:३६–५:१२

रात्रि ८:२४–१०:४८, २:००–३:३६, ४:२४–६:००

*नोटः दिन भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म*
*रात्रि भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म*

# दिव्य गुरू महोत्सव

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) यस धर्तीमा अवतरित हुनु भएको अंग्रेजी महिनाको २१ तारिखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउने क्रममा गत पौष ६ गते (December 21, 2012) सिद्धाश्रम शक्ति केन्द्रले बसुन्धरास्थित आश्रममा उक्त कार्यक्रम सम्पन्न गऱ्यो । बिहान १०:१५ मा शुभारम्भ भएको उक्त कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिक पाठ, गुरु पादुका पूजन, गुरुमन्त्र जप, हवन, आवाहन भजन, आरतीका क्रमहरू सम्पन्न भएका थिए ।

कार्यक्रममा विशेष सूर्य ध्यानको विधि पनि प्रदान भएको थियो ।

# हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सम्पन्न हुँदै आइरहेको मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरू गत महिना निम्नानुसार सम्पन्न भए–

पौष २ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे । पौष ३ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे । पौष ४ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे । पौष ५ गते बिहीबार– तान्त्रोक्त बगलामुखी हवन, बगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे ।

त्यस्तै मासिक हवनकै क्रममा पौष ४ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे । पौष ५ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे । पौष ३ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे, तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे । पौष ७ गते शनिबार– तान्त्रोक्त बाघ भैरव हवन, बाघ भैरव मन्दिर, कीर्तिपुर, समय बिहान ८:००-९:०० बजे ।-

# सिद्धाश्रम शक्ति केन्द्रले गत पौषमा आयोजना गरेको जोधपुर गुरुधामलगायत भारतका तीर्थस्थलहरुको भ्रमणका अविस्मरणीय क्षणहरू - २

पुष्कलमा सामुहिक पूजन गर्नुहुँदै तीर्थयात्रीहरू

तीर्थयात्राको क्रममा अगाडि बढ्नुहुँदै यात्रीहरू

पुष्कलमा संस्थाको तर्फबाट पूजन हुँदै

तीर्थस्थलमा जयकारको गुञ्जन

बासोबासका लागि रोकिएको धर्मशालामा गुरु आरती हुँदै

शिविरमा साधनामा भाग लिनहुँदै तीर्थयात्रुहरू

भागीरथी गंगामा डुंगामा सवार तीर्थयात्रीहरू

म.क्षे.हु.नि.द.नं. २१/०६८/६९ का.जि.का.द.नं. ७०/०५६

# गोरक्ष निखिल आयुर्वेद केन्द्र

(सिद्धाश्रम शक्ति केन्द्रको व्यवस्थापनमा संचालित)

**बसुन्धरा, काठमाडौं, फोन नं. : २१००१५३**

**उपलब्ध सेवाहरु:**

१. दक्ष चिकित्सहरुद्वारा दैनिक बिरामी जाँच ।
२. पञ्चकर्म परामर्ष सेवा ।
३. गर्भवती जाँच (ANC Check Up) ।
४. छाला तथा सुन्दरता क्लिनिक (Skin and Beauty Clinic)।
५. यौन तथा बाँझोपन क्लिनिक (Sex & Infertility Clinic)।
६. आर्युवेद र एलोपेथिको औषधि पाईने फार्मेसी सेवा ।
७. क्षारसुत्र प्रबिधिबाट पायल्स र फिस्टुलाको सफल उपचार ।

**उपचार हुने मुख्य रोगहरु:**

मानसिक रोग, बाउँडिने, बाथ रोग, मुटुरोग, पाइल्स, यूरिक एसिड, मोटोपन, दुब्लोपन, जण्डिस, उच्च निम्न रक्तचाप, दम, मुत्र रोग, नशा च्यापिएको, माइग्रेन, नशाको समस्या, हड्डी खिईएको, पिनाश, पत्थरी ग्याष्ट्रिक, अल्सर, कब्जियत, डिप्रेसन, टाउको दुख्ने, बाल रोग, ढाड दुख्ने, स्त्रीरोग, हात खुट्टा पोल्ने, मोटोपन घटाउने, फिस्टुला, महिनावारी गडबड हुने, सेतो पानी बग्ने, गन्हाउने पानी बग्ने, महिनावारी शुरुहुने बेला देखिने र बन्द हुने बेला देखिने समस्याहरु, अनुहारको चायाँ, पोतो, डन्डिफोर लगायत बिभिन्न रोगहरु ...

परापूर्व कालदेखि अत्यन्त लोकप्रिय, उपयोगी एवं छिटो समयमा नै प्रभावारी पञ्चकर्म पद्धति अब सद्गुरुदेवहरुको कृपाले यही यस आयुर्वेद केन्द्रको वार्षिक उत्सव भाद्र ४ गतेबाट गोरक्ष निखिल आयुर्वेद केन्द्रमा पनि सुचारु हुन गइरहेको सहर्ष जानकारी गराउँदछौं । साथै उक्त दिनबाट नै पाइल्स, फिष्टुलाका लागि पनि क्षारसूत्र प्रणाली सुचारु हुँदैछ । हातखुट्टा, ढाड दुख्ने, सुन्निने, मानसिक रोग, पिनास, आमवात, रक्तवात आदिको पञ्चकर्म पद्धतिबाट उपचार ।